



**KISHORE NEPAL**

# KANTIPUR GATHA

**COLLECTION OF 29 GATHAS PUBLISHED IN PAHILOPOST.COM**





*तीन दशकदेखि निरन्तर लेखिएको किशोर नेपालको 'कान्तिपुर गाथा' तन्नेरी पुस्ताले रुचाएको लोकप्रिय सिर्जना हो। परम्पराका नाममा हुर्काइएका पाखण्डमाथि कटाक्ष र स्वतन्त्र बाँच्न चाहने तन्नेरी पुस्ताको यायावरी जीवनको वर्णन गाथाको मुख्य पक्ष हो। टेलिसिरियल शैलीमा लेखिएका २९ वटा गाथाको यो संग्रह अप्रिल ३०, २०१६ देखि नोभेम्बर १८, २०१६ सम्म पहिलोपोस्टका प्रकाशित भएका हुन्। news@pahilopost.com*

# १. मायाको ग्यारेन्टी



पोहोर साल वैशाख १२ को भुईंचालोपछि शहर रोमान्टिक रहन सकेन। वर्षैभरि भुईंचालोको भयले शहर आवाद गर्ने सबैको मन र मुटु काँपेको थियो। यो वैशाख १२ गते भुईंचालोको सम्झनामा सरकारले कान्तिपुर शहरमा धूपबत्ती बालेपछि बल्ल पहिलो डेटिंगमा निस्केका थिए कनिका र चार्ली। जंगलका पंक्षीहरु जस्तो, भुरुरुर्र उडेका थिए। भुईंचालोको एक वर्ष पूरा भएकोले होला, सोचे भन्दा र चाहिने भन्दा बढी नै अस्तव्यस्त थियो शहर। शहर जतिसुकै अस्तव्यस्त भएपनि बल्ल बल्ल स्वतन्त्र रुपमा घरबाट निस्किएकी कनिका रोमान्टिक मूड्को उत्तालमा थिई। उसलाई कफी पसल जाने मन थियो। भुईंचालोपछि एकदिन पनि त्यहाँ पाइलो टेक्न पाएकी थिइन उसले। केटी निकै चलाख थिइ। उसले चार्लीसँग अलिकति सोधे जस्तो र अलिकति सुझाएजस्तो परामा भनी, “हामी कफी पसल जाने होइन ?”

चार्ली कनिकासँग जहाँ जान पनि तयार थियो। कनिकासँगको यो डेटिङलाई ऊ जीवनको बिर्सनै नसकिने घटना बनाउन चाहन्थ्यो। ममी–पापाले गाउँका कुनै काजीको छोरीसँग बिहे गरिदिनुभन्दा पहिले नै उ कनिकासँग बिहे गर्न चाहन्थ्यो। यसका लागि निकै हतारिएको थियो चार्ली।

कूल थियो कफी पसल। रमझम थियो। कफीको कडा र सुमधुर बासना थियो। सिटमा बस्दाबस्दै चार्लीले कनिकासँग सेल्फिन 'सिक्स–प्लस' निकाल्यो। कनिकाले भनी, "अहिले नखिच न। फेसबुकमा चढ्यो भने के गर्नु ? अहिलेसम्म त तिम्रो मायाको ग्यारेन्टी नै पाएकी छैन मैले।"

मायाको ग्यारेन्टी ! चार्ली झस्कियो। माया मानौं माया नभएर फोसिल ब्राण्डको घडी हो, जसको हरेक पीसमा एउटा वारेन्टी कार्ड झुण्डिएको हुन्छ। मानौं यो त्यस्तो कम्पनीको जुत्ता हो, जुन कम्पनीले पाँच वर्षसम्म तलुवा नखिइने ग्यारेन्टी दिन्छ।

चार्लीले भन्यो, "तिमीलाई मेरो मायाको ग्यारेन्टी त दिन सक्दिन म। भुईंचालोको यो युगमा मेरो आफ्नै जिन्दगीको त कुनै ग्यारेन्टी छैन। मायाको के ग्यारेन्टी दिउँ तिमीलाई?"

चार्लीको यो डाइलग निकै मन पराइ कनिकाले।

चार्लीले बोल्दाबोल्दै नियमित रुपले आउने स–सानो भुईंचालोले स–सानो धक्का दियो। कफी पसलमा बसेका मानिसहरु आत्तिदै जर्‍याकजुरुक उठे। केही छिनअघिको रमाइलो सकियो। सबै भाग्न थाले। कनिका आत्तिइ र सिटबाट उठन खोजी। चार्लीले भन्यो, "सकिइ सक्यो, भुईंचालो। यत्ति हो। अब अहिले नै दोहोर्याएर आउँदैन। आत्तिनु पर्दैन।"

कनिका चार्लीसँग लिपिक्क टाँसिइ। चार्लीले मौका छोप्यो। सिक्स प्लसको फ्रेमभित्र आफूलाई कनिकासँग कैद गर्यो र भन्यो, "अघिको भन्दा अलि ठूलो भुईंचालो आयो भने तस्वीर खिच्ने मौका नपाइन पनि सक्छ। तिमी र म नजिकिएको सम्झना नै भयो यो।"

कनिका केही बोलिन। मुसुक्क हाँसी। चार्लीको कुरा उसलाई घत परेको थियो। उसले भनी, "मायाले ग्यारेन्टी त खोज्छ। तर जिन्दगीकै कुनै ग्यारेन्टी नभएको भुईंचालोको सिजनमा ग्यारेन्टीको के कुरा भो र।"

ऊ निकै सेन्टी भएकी थिइ। त्यति नै बेला उनीहरुको अर्डरको कफी टेवलमा आइपुग्यो। ऊ आइस्ड क्यारामेल लात्तेको स्वादमा रमाउन थाली।

चार्लीले भन्यो, "ग्यारेन्टी त होइन, म तिमीलाई मेरो मायाको लाइफलंग वारेन्टी दिन सक्छु। हाम्रो माया भत्कियो, बिग्रियो, टुट्यो, फुट्यो भने त्यसलाई सुपर ग्लूले जोडने वारेन्टी।"

कनिकाले कफीको लामो गिलासबाट लामो चम्चाले आइसक्रिमको एक टुक्रा निकालेर मुखमा हाली। आइसक्रिम नपग्लियुन्जेल ऊ मन्द मन्द हाँसी रही। त्यसपछि हाँस्दै बोली, "माया स्कूटी हो र मर्मत गर्न सकिने ? एनी वे, इट इज अ भेरी इन्टरेस्टिङ जोक। लाइक्ड द्याट।"

चार्लीले मनमनै सोच्यो, "मायाको बलियो वारेन्टी त बैंक व्यालेन्स हो नि" र विस्तारै कनिकाले मात्र सुन्ने गरी बोल्यो, "माया पनि स्कूटी जस्तै त हो। मनलाई बोकेर टाढा टाढासम्म दौडिन्छ..." कनिका फेरि हाँसी। अलि चर्को हाँसो र भनी "हाउ फन्नी।"

कनिकाले अचानक सोधी, "म्याथम्याटिक्समा वीक भएँ म। तिमीलाई आउँछ ?"

चार्ली बोर भयो। उसले भन्यो, "बिर्सिइ सकें मैले।"

कनिकाले चार्ली उक्ताएको थाहा पाइ र भनी, "हिंड, कतै जाउँ। कति बस्नु कफी पसलमा।"

उनीहरु निस्किएर बाहिर आए। कता लाग्ने ? उनीहरुले निश्चय गर्न सकेनन्। कनिकाले भनी, "अलि रोमान्टिक ठाउँमा जाउँ न।"

यो शहरमा कहाँ छ रोमान्टिक ठाउँ ? चार्लीले सोच्यो, यो त गुगलले पनि पत्ता लगाउन सक्दैन। एकमन त चार्लीलाई लाग्यो कनिकालाई हनुमानढोका लगेर टुँडालमा कुँदिएका रोमान्चक दृश्यहरु देखाइ दिउँ। तर, उ यो नयाँ जोडिन आएको रिलेसनशीपमा कुनै रिस्क लिन चाहँदैनथ्यो।

उनीहरु बाइकमा दरबारमार्गबाट पाटनतिर हानिए। ल्याम्प पोष्टहरु छुटदै गए। बाटो कतै लम्विदै र कतै छोटिदै गयो। कतै सांघुरिदै गयो।

ड्राइभ निकै निकै र निकै रोमान्टिक रह्यो। यात्रामा कति पटक साना भुईंचालोका स–साना धक्काहरु आए, केही थाहा पाएनन दुवैले।

साँझ उनीहरु फर्किंदा मण्डलामा मैनवत्तीहरु बलिरहेका थिए। त्यो उज्यालोमा लजाउँदै कनिकाले भनी, "भुईंचालोको यो युगमा तिमीभन्दा रोमान्टिक अर्को कुनै साथी भेटिन्न।"

चार्लीले बिस्तारै उसलाई चुम्दै भन्यो, “थ्यांक यू, कनि...”

# २. आमा र मायाको मौसम




शुक्रबार विशेष दिन। आमाहरुका लागि छुट्याइएको मदर्स डे। आमाको मुख हेर्ने र खुवाउने औंसी। सामाजिक संजालमा आमाको फोटो टाँस्न व्यस्त प्रयोगकर्ताहरु। गाउँकी आमाको प्रतिविम्व। सम्झनामा भर्खर तताएको गाई–भैंसीको शुद्ध दूधको बटुको समातेर सन्तानलाई दूध पिलाउन खोजी रहेकी आमा। आमाको मायामा बरररं झारिएका आँसुले छपक्क भिजेको फेसबुकको भित्तो। त्यसमा टाँसिएका बहुरंगी तस्वीरहरु। तस्वीरका अगाडि थुपारिएका फलफूल र मिठाइका परिकारको थुप्रो। आमाहरुको आँखामा टल्किएको सन्तानको स्नेहप्रतिको अविश्वास। परार साल चुल्ठोमा समातेर घिस्याउँदै घरबाट निकाल्ने छोरा–बुहारीको हृदय परिवर्तनपछिको यो असीम प्रेम। के विश्वास गर्नु र के विश्वास नगर्नु ? एक दिने माया। कति माया, कति छलछाम। अलिअलि व्यंग्य र अलिकति वक्रोक्ति।

मातातीर्थ पोखरीको छेउमा उभिएकी कनिका सोच्दैथिइ। उसकी आमा घरमा थिइन। उनैले राखेकी थिइन् उसको नाम कन्याकुमारी। उसले त्यो नामलाई संशोधन गरेर आफूलाई बनाएकी थिइ कनिका। कनिका आमा जीवित भएकोमा खुशी छे। उनले उसलाई धेरै छूट दिएकी छिन्। ठट्टा गर्छिन्। हँसाउँछिन्। छोराछोरीको आँखामा कहिल्यै पनि एकथोपा आँसु

देख्न सक्दिनन्। आमा बिहान मात्रै दाजुलाई जिस्क्याउँदै थिइन्, “मलाई नयाँ फोन ल्याइदिनस् भने तँलाई मेरो मुख हेर्नै दिन्न।”

चार्ली पोखरीको पानी हातमा लिएर आफूलाई चोख्याउँदैछ। उसकी आमा छैनन्। बाबु पनि छैनन्। बाबुको भन्दा पनि आमाको सम्झना बढी आउँछ चार्लीलाई। बाबु मरेका छैनन्। चार्लीका लागि मरे बराबर नै छन्। आमा मरी सकिन्। अहिलेसम्म उसका लागि जीवित छिन् उनी।

मातातीर्थबाट फर्किदा चार्लीले कनिकालाई सुनायो, “अस्ति राति आमाले तिमीसँग बिहे गर्नू भनिन्।”

कनिकाले भनी, “गर न त । म सँगै गर्ने त हो नि। म तयार छु। अहिले नै गर्ने भएपनि मन्जुर।”

चार्लीले जवाफ दियो, “बिहे पनि त्यसरी हुन्छ त ? त्यो पनि आज आमाको मुख हेर्ने औँसी।”

कनिकाको कुराले चार्ली झस्कियो। बिहे नगर्ने मनसाय उसको थिएन। अहिले नै बिहे गर्ने कुरा उसले सोचेको थिएन।

कनिकाले जवाफ दिई, “औंसी भएर के भो त। अघि देखेनौं हामी आउँदा बाजा ठोकेर त्यत्रा जन्ति गएका थिएनन् ?”

चार्ली केही बोलेन। यतिखेर ऊ बोल्न तयार थिएन। भोकले दाव्दै ल्याएको थियो उसलाई। उसले कालिमाटीको एउटा रेष्टुराँको पार्किंगमा बाइक रोक्यो र कनिकासँग भन्यो, “खाना खाने होइन ?”

खाना खानुभन्दा अघि उनीहरुले बियर पिए। बियरले झुम्म बनायो कनिकालाई। उसको अनुहार रातो–रातो भयो।

छेउको टेबुलमा बसेका केही व्यक्तिहरु चीन र भारतको चर्चा गर्दै थिए। उनीहरुको छलफल कान्तिपुरमा एक डेढ वर्षभित्रै चल्ने मेट्रो रेलमा केन्द्रित थियो । कनिकाले चार्लीको कानैमा ओंठ पुर्‍याएर विस्तारै भनी, “सुन्यौ त ?”

चार्ली हाँस्यो। कनिका पनि हाँसी र भनी “ल, मेट्रो रेलको नाममा एकएक बियर थपौं। मज्जा आयो।”

छेउको टेबुलमा छलफलको विषय बदलिएर राजनीतिमा सरेको थियो। एउटा बुज्रुग भन्दै थियो, “सरकार ढाल्ने त खेल नै होइन नि। प्रचण्डभन्दा ओली बूढो कता हो कता बाठो छ। वामपन्थी एकताको कुरो गऱ्यो होला। बजेटपछि तिमी नै प्रधानमन्त्री भन्यो होला। त्यति भए पुगिहाल्यो प्रचण्डलाई। यी ज्यानमाराहरुलाई नथुनी के छाडथ्यो ओलीले। हेरी राख साथी हो।”

पछिल्लो छलफल कनिका र चार्ली दुवैले बुझेनन्। राजनीतिमा उनीहरुको खासै चासो थिएन। उनीहरुका लागि घरघरमा ग्यासको पाइप र मेट्रो रेल नै काफी थियो सम्झिन र बुझ्नका लागि।

बियर सकिएपछि उनीहरुले खाना खाए। चार्लीलाई सुतौं सुतौं लाग्न थालेको थियो। कनिका त आधा निंद्रामा नै थिइ। कनिकालाई लिएर कसरी पुग्नु बानेश्वर? चार्ली टेन्सनमा थियो। उसले बाइक पार्किंगमा छाडेर ट्याक्सीमा जाने विचार गर्‍यो। कनिका भने बाइकमा नै जाऊँ भन्न थाली। चार्लीले मन दह्रो बनायो। लिपिक्क टाँसिएर बसेकी कनिकालाई लिएर बाइक दौडायो। कनिका अलिकति निंदाउँथी, त्यसपछि अलिकति व्युझिन्थी र भन्थी, “चार्ली हामी आजै बिहे गरौं न।”

चार्ली आमाको अनुहार सम्झिन्थ्यो र झस्किन्थ्यो, हो बिहे त गर्नै पर्दछ। यो उमेरमा नगरेको बिहे कहिले गर्नु?

चार्लीको कोठामा पुगेर दुवै निंदाए। उनीहरु उठ्दा साँझपर्ने समय भै सकेको थियो। कनिका आत्तिइ, “ओ माइ गड । ममीको मुख हेर्ने बेला हुन लागिसकेछ । मलाई घर पुऱ्याइ देऊ न चार्ली।”

चार्लीले जिस्क्यायो, “बिहे नगरी जान्छ्यौ ?”

कनिका हाँसी, “लगन जुराइ राख न।”

# ३. अमरपंक्षीमा हम झण्डु वाम हुए डार्लिङ...



कसो कर्नेल्नी अण्टी गुहारेर दुईवटा टिकटको व्यवस्था गरी सकेकी थिइ कनिकाले। "अमर पंक्षी" अर्थात् सैनिक श्रीमती संघको आयोजनामा हुन लागेको नाचगानमा सहभागी हुन निकै रौसिएकी थिइ ऊ। किन हुँदै थियो कार्यक्रम ? कनिकालाई थाहा थिएन। थाहा पाउने चासो पनि थिएन उसलाई। भारतीय सिने–संसारकी मसहूर नायिका सोनाक्षी सिन्हा र दवंग सिनेमाकी बद्नाम मुन्नी अर्थात् मलाइका अरोराको नाच भनेपछि ऊ त्यसै रमाएकी थिइ। उसलाई लागेको थियो यी दुई कलाकारको तालमा डुब्नेछ आज शहर कान्तिपुर। टुँडिखेलमा हुने यो संगीत र नृत्यको समारोहले भत्किएको धरहरा जुरुक्क खडा भयो भने पनि आश्चर्य हुने छैन। कनिकालाई यस्तै लागेको थियो।

शनिवार। सँधै क्याजुअल ड्रेसमा रमाउने कनिकाको ड्रेस–अप निकै फरक थियो आज। अफगानी स्टायलको सलवार चोलीमा थिइ ऊ। उसले टाउको छोपेकी थिइ रंगीन स्कार्फले। सँधै कि जिन्समा कि हट प्याण्टमा हुन्थी र साधारण देखिन्थी। आज भने ऊ पूरै मुस्लिम युवती देखिएकी थिइ। कमि थियो त कालो रंगको बुर्का मात्र।

कनिकाको यो रुपलाई चार्लीले निकै बेर हेर्‍यो, निकै नियालेर हेर्‍यो र कनिकालाई नौनी लगाउँदै बोल्यो, "ओहो, कनि, कान्तिपुर वील रक टुडे। तिमीलाई त सारी पनि उत्तिकै सुहाउला हगि ?"

कनिका मुस्काराउँदै बोली, "धेरै चापलुसी नगर। आज म होइन, सोनाक्षी सिन्हा इज रकिङ इन दि सिटी। तर, साँच्ची मैले सारी लगाएको भए झन् राम्री देखिन्थे होला। लेट द्याट वी।"

शो शुरु हुन अझै चार पाँच घण्टा बाँकी थियो। चार्लीले भन्यो, "आज पानी दर्केर पर्यो भने झन रमाइलो हुन्थ्यो। पानीमा भिज्दा त तिमी झन दामी देखिन्थ्यौ होला।"

प्रतिक्रियामा कनिका बोली – कस्तो अलच्छिनी थुतुनो।

चार्ली हाँस्यो मात्र।

कनिका बोली, "अब भने रमाइलो हुने भो। चीनबाट रेल आउने। भारतबाट नाच–गान आउने।"

चार्लीले थप्यो, "दुबई–कतारबाट नोट आउने।"

कनिकाले सोधी, "भन त चार्ली, चीनबाट रेल डाइरेक्ट आउला त ?"

चार्लीले जवाफ दियो, "आइ हाल्छ नि। रेल आउन के भो र ? दुई वटा पटरी ओछ्याउने त हो नि। प्रधानमन्त्रीले नै भनेका छन् – हेर्दाहेर्दै रेल पनि आउँछ र ग्यास पनि आउँछ।"

त्यसपछि एकैछिन उनीहरुले झमझम पानी ओइरिएको कल्पना गरे। स्टेजमा निथ्रुक्क भिजेका सोनाक्षी र मलाइका। उनीहरुलाई घेरेर बसेका प्रियंका कार्की, रेखा थापा, निशा अधिकारी, सुषमा कार्की, ऋचा शर्मा, केकी अधिकारी र इन्दिरा जोशी जस्ता लोकप्रिय नेपाली अभिनेत्रीहरु। यी सबैलाई घेरा हालेर बसेका भुईंचालो पीडित क्षेत्रका जनता। ती जनतालाई पनि घेरेर बसेका को को, को को। मानिसको अपार भीडमाथि झम्के पानीले गरेको प्रहार। उनीहरुले पछि रियलाइज गरे कल्पना अलिकति चर्को नै भयो।

उनीहरुको कल्पनामा मलाइकाको हातमा झण्डु वामको वट्टा थियो "मैं झण्डु वाम हुइ, डार्लिङ तेरे लिये।"

उनी आफनो नाकको टुप्पोमा दल्दै थिइन् झण्डु वाम। सोनाक्षी सिन्हा, खोइ किन हो, लजाइरहेकी थिइन्। पानी रोकिने तरखरमा थियो। दर्शकहरु कराउँदै थिए "वन्स मोर। हामी भिज्न पनि तयार छौं र सुन्न पनि तयार छौं।"

कनिका र चार्लीको कल्पना टुंगियो। उनीहरु निकै खुशी थिए। चार्लीले फेसबुक खोल्यो र अमरपंक्षीको नाममा एक लाइक ठोक्यो। कनिकाले इन्स्टाग्राममा अपलोड गरी। दुवैले मोवाइलको व्याट्री चेक गरे। पावर वैंकको जाँच गरे।

उनीहरु भीडलाई चिर्दै गेटमा पुगे।

ओहोहो, कनिकाको हातमा उसको पर्स थिएन। शोको टिकट त्यही पर्समा थियो...

# ४. हेर्ने होइन हाँस्ने न्युज

चार्ली दुःखी थियो। किनभने कनिका उदास थिई। अमरपन्छीको हजार दरको टिकट राखेको पर्स हराएपछि उनीहरु निकै बेरसम्म दुवै जना टुँडिखेल वरिपरि हल्लिएका थिए। कनिकाले आफूलाई हुस्सुको लहरमा उभ्याएकी थिई। अमरपन्छी उडाउने दिन एउटा नेवार परिवारको कुलपूजा रहेछ। आ–आफनो चलन न हो। उनीहरुको चलन रहेछ, टुँडिखेलमा पूजा गरेर भोज खानुपर्ने। भोज खानका लागि एक टुक्रो टुँडिखेल समेत नपाएपछि दिक्क भएको त्यो परिवार टुँडिखेलको बाहिरपट्टि एक छेउमा बसेर भोज खाँदै थियो।

टुँडिखेलमा भोज खाने चलनको ज्ञान पहिलोपल्ट पाएका थिए चार्ली र कनिकाले। सुनेपछि कनिकाले दुई हजारको टिकट हराएको बिर्सिई। तर, क्रोकोडाइलको स्कीनले बनेको त्यो सुलुक्क परेको पर्स बिर्सिन सकिन। कसरी बिर्सिन सक्थी र ऊ। त्यो पर्स उसका लागि निकै मूल्यवान् थियो। उसको 'एक्स'को गिफ्ट। एक्स उसलाई केही थाहै नदिई युएस गयो। डिभी परेछ मोरालाई। उसले चार्लीलाईं सुनाएकी थिई, 'मोराले मलाई भनेर गएको भए के हुन्थ्यो र ? म त्योसँग झुण्डिएर जाने थिइनँ। मजस्ती राम्री गर्लफ्रेण्डलाई छाड्न सक्ने कस्तो झुर मान्छे।'

चार्लीले सोध्यो, 'त्यसको नामै मोरा हो कि के हो ?'

कनिका तर्सिई, 'त्यसको नाम त म आफ्नो ओठमा ल्याउँदै ल्याउन्नँ।'

त्यसको भोलिपल्टै नेपालले पानीजहाज किनेर समुद्रमा चलाउने कुरा सुनियो। चार्ली र कनिका पानीजहाज चढ्ने योजना बनाउन लागे। उनीहरुले टाइटानिक सिनेमामा मात्रै देखेका थिए पानीजहाज। उनीहरु पशुपतिनाथको मन्दिरतिर लागे। आकाशमा बादल भए पनि गर्मीले उकुसमुकुस पारेको थियो दुवैलाई। उनीहरु एउटा आइसक्रिम पार्लरमा छिरे। एकएक कोन आइसक्रिम खाएपछि कनिकाले भनी, 'हामी पानीजहाजमा नै बिहे गरौं न।'

चार्ली हाँस्यो र भन्यो, 'मलाई त केही फरक पर्दैन। पानीजहाज आउन्जेलसम्म तिमीचाहिँ चाउरिइसकेकी हुन्छेउ।'

कनिकाले हाँसो रोक्न सकिन। मौका छोपेर चार्लीले सेल्फी हान्यो।

उनीहरु पशुपतिनाथ पुग्नपुग्न लाग्दा पानी पर्न थाल्यो। उनीहरु एउटा कफी शपमा पसे। कनिकाले केही सम्झेझैँ गरी र चार्लीलाई सोधी, 'अमरपन्छीले कति कमाएछ ? तिमी त न्युज हेर्ने मान्छे। एनी आइडिया?'

चार्लीले जवाफ दियो, 'नो आइडिया। अचेल त न्युज हेर्ने होइन, न्युज हाँस्ने हो।' चार्लीको जवाफ उच्चस्तरीय थियो। कनिकाले बुझिन र ओठ लेप्र्याई।

चार्लीले भन्यो, 'यो सेना–पुलिसको कुरा थाहा हुँदैन। कमाइ धेरै भएको भए त शहरभरि त्यसैको चर्चा हुन्थ्यो। थोरै भयो होला। केही बताएनन्।'

अमरपन्छी उडेर गएपछि कान्तिपुरमा सोनाक्षी र मलाइकाको छमछममा राष्ट्रवाद लमतन्न परेर पसारिएको चर्चा चल्यो। सेनाले ती नर्तकीहरुलाई आवश्यकताभन्दा बढी सम्मान दिएकोमा नेपालका महानायक राजेश हमालको चित्त काटियो। सोनाक्षी र मलाइकाको छमछममा ताल मिलाउन पुगेका नेपाली नर्तकीहरुले पनि खुशी मनाएनन्। चार्लीलाई अनुपाले सुनाए अनुसार शो रमाइलो थियो। वातावरण भने रसिलो थिएन।

'आफनो टिकट हराएपछि शो रसिलो होस् कि विरसिलो, बालै भएन नि,' चार्लीले भन्यो। कनिकाले रुन्चे अनुहार लगाउँदै भनी, 'नसम्झ न भन्या। मचाहिँ क्रोकोडाइल बिर्सिन खोज्छु तिमी भने झन् सम्झाउँछौ।'

'ल अब सम्झाउन्नँ। चार्लीले प्रमिस गऱ्यो र भन्यो, 'पानीजहाज त चढ्नैपर्छ। समुद्रसम्म पुग्ने पो कसरी हो ?'

त्यसपछि उनीहरु गुगलमा अलमलिए। गुगलले नेपालबाट नजिकको समुद्र तटको कम्पास चीनतिर तेर्सिएको देखायो। चार्ली छक्क पऱ्यो।

जलवायु परिवर्तन हुन लागेको त पढेको थियो उसले। त्यो सँगै अब त भूगोल पनि परिवर्तन हुने थालेछ। ऊ दंग पऱ्यो।

पानी थामिएपछि उनीहरु फर्किए।

अमरपन्छीको स्टेजनिर नेवारहरुको तीन चार परिवार कुलपूजा सकेर भोज खाँदै थिए। छेउमा मोबाइल घन्किदै थियो, 'मुन्नी बदनाम हुई डार्लिङ तेरे लिये...'

# ५. सपनाको प्रत्यक्ष प्रसारण

स्थानीय बौद्ध पार्कमा टन्नै थिए मानिस र महिलाहरु। तन्नेरीहरुको एक दर्जन जोडी उपस्थित थियो त्यहाँ। चार्ली र कनिकाको जोडी सबभन्दा पछि आइपुगेको थियो। क्वीज कन्टेष्ट चलिरहेको थियो त्यहाँ। चार्ली र कनिकाको जोडीलाई देख्ने वित्तिकै कार्यक्रम सन्चालकले प्रश्न सोधी हाल्यो, 'नेपालमा सबभन्दा बढी र सबभन्दा रोचक सपना देख्ने कलाकारको नाम के हो ?'

जवाफ कनिकाले दिइ, 'सर, उनको नाम ओली हो, केपी ओली।'

अर्को प्रश्न आयो, 'उनी कतिबेला देख्दछन सपना ?'

चार्लीले जवाफ दियो, 'दिनमा सर, दिनमा। दिनमा देखेको सपनाको दोष लाग्दैन भन्नुहुन्थ्यो मेरो जिजु मुवाँ। त्यसैले दिनमा देखिने सपनालाई दिवास्वप्न भनिन्छ।'

त्यसपछिको प्रश्न निकै कडा आयो, 'कति लामा हुन्छन् उनका सपना ?'

यसपटक कनिकाले जवाफ दिइ, 'केही भन्न सकिन्न सर। कहिले एक वर्ष लामो हुन्छ सपना, कहिले पाँच–सात हजार किलोमिटर लामो हुन्छ। घरमा घरमा ग्यास जोडने सपना चारपाँच महिना लामो थियो। बिजुलीको सपना दुई तीन वर्ष तानिएको थियो। रेलको सपना अलि छोटै थियो। पानीजहाजको सपना एक वर्ष लामो थियो। अस्तिमात्रै देखेको केरुङसम्म बिजुलीको प्रसारण लाइन वनाउने सपना पाँच–सात महिना लामो छ।'
कार्यक्रम प्रस्तोताले प्रश्न गर्यो, 'यसमा कुनै सपना त छुटेका छैनन ?'

जवाफमा चार्ली उतर्सिंदै बोल्यो, 'छुट्यो सर छुट्यो। कनिकाले हावाबाट विजुली निकाल्ने सपना छुटाइ। त्यो सपना धेरै लामो अवधिको थिएन। यस्तै महिना–पन्ध्र दिनको थियो।'

अर्को प्रश्न निकै गारो आयो, 'उनी कस्ता सपना देख्दैनन् ?'

चार्लीले कनिकालाई जवाफ दिन संकेत गर्‍यो। कनिकाले टाउकोमा हात राखेर सरेण्डर गरी। त्यसपछि चार्लीले कनीकुथी जवाफ दियो, 'उनी भुईंचालो पीडितलाई घर बनाउन तत्काल राहत वितरण गर्ने सपना देख्दैनन्। बढ्दो महंगी नियन्त्रण गर्ने सपना देख्दैनन्। मधेशको समस्या सुल्झाउने सपना पनि देख्दैनन्। बरु मधेशमा आन्दोलनकारी गोली वा गुलेलीको प्रहारले मर्दा लटरम्म आँप फलेको रुखबाट सय पचास दाना आँप गोली लागेर खसेको सपना देख्दछन्। घूसखोरी रोक्ने सपना त झन देख्दै देख्दैनन्। दिनभरि उनी देश विकासका ठूलठूला सपना देख्न निदाउँछन। निद्रा बिथोलिएला भनेर अफिस पनि जाँदैनन। निवासमा नै सुत्छन् र सपनाहरु पनि त्यहीं देख्दछन्।'

चार्लीको उत्तर सुनेर कार्यक्रम प्रस्तोता दंग पर्‍यो। त्यसपछि उसले कनिकालाई सोध्यो, 'यस्ता सपना देख्ने उनी एक्लै हुन कि अरु पनि छन्?'

कनिकाले जवाफ दिइ, 'अहिलेसम्म त उनीमात्रै हुन यस्तो अजंग अजंगको सपना देख्ने। यस्ता सपना देख्ने र त्यसको वर्णन गर्ने पुरुषार्थी कोही देखिएका छैनन् अहिलेसम्म। बरु, माओवादी अध्यक्ष पुष्पकमल प्रचण्डले अस्ति एकपल्ट स्वप्नद्रष्टा केपी ओलीलाई विस्थापित गर्ने सपना देखेका थिए। त्यो सपना एक रातमा नै ड्याम खलास भयो। यसबाहेक, कोही त्यस्तो हुतिवान स्वप्नद्रष्टा देखिएका छैनन।'

कार्यक्रम प्रस्तोताले अर्को प्रश्न गर्‍यो, 'केपी ओलीका यी सपनाका वारे युवा पुस्ताका मानिस र महिलाहरु के भन्छन त ?'

जवाफमा चार्ली बोल्यो, 'एक साताअघि एकजना युवती यी सपनाहरुबाट यति प्रभावित भइन् कि उनले आफना बाबुआमासँग केपी ओलीसित बिहे गरिदिन जिद्दी गरिन्। कुनै पनि विवाहित पुरुषसँग बिहे गर्नु कानूनका हिसाबले अपराध हो भनेर बाबुआमाले सम्झाए। उनले जवाफ दिइन्, केपी ओली म्यान होइनन्, सुपरम्यान हुन। मेरो बिहे त सुपरम्यानसँग हुने हो। म्यानसँग हुने भए पो कानून लाग्नु। त्यसपछि के भयो अपडेट छैन म सर।'

त्यसपछि कार्यक्रम प्रस्तुतकर्ताले त्यहाँ जम्मा भएका सहभागीहरुसँग सोध्यो, 'तपाईंहरु मध्ये कसैलाइ यसवारे केही जानकारी छ ?'

सहभागी मध्येको एकजना दुव्लो दुव्लो युवाले जानकारी दियो, 'हाम्रो गाउँको भजन मण्डलीले ओलीको मन्दिर बनाउन चन्दा संकलनको काम थालेका छन्। पचास लाखको लगतमा हाम्रो गाउँमा ओली देवको नाममा एउटा भव्य मन्दिर खडा हुँदैछ।'

अर्को अलि पुडको मानिसले जानकारी दियो, 'जनतालाई रेडियो र टेलिभिजनले उनको सपना सुनाउन थालेदेखि हाम्रो बजारको एकमात्र सिनेमाघर बन्द भएको छ।'

कार्यक्रम प्रस्तोताले सोध्यो, 'अरु कोही हुनुहुन्छ जानकारी दिने ?'

सहभागीहरु कोही बोलेनन्।

कार्यक्रम समाप्त भयो।

कनिका र चार्ली विजेता घोषित भए। उनीहरुले सय रुपियाँ मूल्यको एक एक थान रिचार्ज कार्ड उपहार पाए। त्यसपछि सपनाको धून घन्किन थाल्यो, 'ए कान्छा मलाइ सुनको तारा खसाइ देउ न। त्यो तारा मातरै होइन जून पनि झारी दिउँला...'

# ६. लाग्यो चार्ली कतारतिर

संसदमा बजेट भाषण भएको दिनदेखि कनिका र चार्लीको भेट भएको थिएन। झगडा परेर होइन, कुनै लफडा भएकोले पनि होइन। त्यसो भएको भए दुवैले दुवैलाई मिस गर्दैनथे। उनीहरुले एक अर्कालाई मिस गरिरहेका थिए। तैपनि, एकअर्कालाई मिसकल भने दिएका थिएनन्। चार्ली सोच्दै थियो, 'कनिकासँग भेटन पाए यो मन हलुंगो हुन्थ्यो कि?' कनिका सोच्दै थिइ, कतै मभन्दा राम्री केटीसँग फ्रेन्डसिप भयो कि? दुवै एक अर्कालाई सम्झिरहेका थिए। नजिक भएर पनि सम्पर्कमा थिएनन्। चार्लीको हालत खराब थियो। उसको मोवाइल वान वे भएर बन्द पनि भइसकेको थियो। मान्ना कफीमा केही महिना काम गरेको थियो चार्लीले। दुई महिनाको पे लिन बाँकी नै थियो। त्यहाँसम्म जाने गाडी भाडा पनि थिएन ऊसँग।

बजेट भाषणको भोलिपल्ट बिहान ऊ घरैमा बसेर मोबाइल खेलाइरहेको थियो। नेटसँग नजोडिएको मोबाइलमा खेलाउने एप्स के नै हुन्छ र? उसले अचानक सुन्यो। पापा कराउँदै छ मामुसँग, 'यत्रो महंगी बढेको छ, उसमाथि सरकारले कर्मचारीको तलव बढाइदिएको छ। अब बजार भाउ झन चुलिन्छ। तेरो त्यो राजकुमार कामसाम केही गर्दैन, आवारागर्दी गर्दै हिंडछ। अस्ति पनि एउटी नखरमाउलीलाई बाइकमा हालेर दौडिँदै थियो रे। भन्दे त्यो पाजीलाई, आजदेखि त्यसका लागि बाबुको होटलमा भात पाक्दैन।'

चार्लीलाई पापाको कुरा बुझ्न बेर लागेन। भुईंचालो गएदेखि उनको व्यापार घटेको छ। टन्न पैसा कमाउँदा कहिले केही भनेनन्। अहिले चिडचिडो भएका छन्। प्रेसरको ओखती खान थालेका छन्। कहिलेकहीं पड्किन्छन्। चार्ली पापाको पडकाइमा त्यति ध्यान दिँदैनथ्यो। तर, पापाको आजको पडकाइले उसको चित्त ढुंगामा बेस्सरी ठोक्किएको छाती जस्तै दुख्यो। पापाले खाएको भातसम्म कुरा ल्याएकोले उसलाई दिक्क लाग्यो। मनमनै भन्यो, आजैदेखि घरमा भात खानै छाडिदिन्छु।

केही बेरपछि उसले चाल पायो, पापा घरबाट निस्किए। ऊ विस्तारै मामुको नजिक पुग्यो। मामुलाई देखेर ऊ भक्कानिएर रोयो। बीए पास गरेको लक्का जवान छोरोको आँखाबाट भलभल आँसु बगेको देखेर मामुको मन कटक्क काटियो। उनले चार्लीको टाउको सुमसुम्याउँदै भनिन्, चित्त नदुखा। पापालाई निकै टेन्सन छ। त्यसैले जंगिएका हुन्। हिंड खाना खान।

चार्लीले भन्यो, 'खान्न। म अब कतार जान्छु। मेरो साथीले बोलाएको छ। त्यहाँको कफी स्टोरमा काम गर्ने। पैसा कमाउन। यहाँ बसेर जति काम गरे पनि त्यही दश–पन्ध्र हजार कमाउने हो। त्यही पनि आफना मान्छे कोही छैनन्। कसले दिन्छ काम मलाई? मेरा साथीहरु पनि सबै उतै गै सके। अब म पनि उतै जान्छु।'

मामुले आत्तिदै भनिन, 'के रे के रे। कतार जाने रे ? के भयो तेरो पढे लेखेको बुद्धि? किन दुःख दिन्छस् मलाई तँ ? पर्दैन जान त्यस्तो अनकण्टारमा। भो, चाहिएन पैसा–सैसा।'

चार्ली गम्न थाल्यो, किन चाहिन्न पैसा ? पैसा भएको भए पापाले त्यस्तो वचन लाउने नै थिएनन्। उसले कतार जाने निश्चय गरिसकेको थियो। उसलाई थाहा थियो, मामुले जे भने पनि यो त आमाको मन बोलेको हो। एकछिनसम्म ऊ केही बोलेन। आमाको अनुहार हेरिरह्यो क्वार्कार्ती। त्यसपछि बोल्यो, 'मामु, मसँग त मोबाइल चार्ज गर्ने पैसा पनि छैन। बाइकमा तेल पनि छैन।'

उसले भन्यो, 'अहिले त खानै मन लागेको छैन। पछि खान्छु।'

छोराको पिटपिट्याउँदो अनुहार हेरिन् मामुले। त्यसपछि कोठामा पसिन् र हातमा दुई हजार लिएर निस्किइन्। पैसा चार्लीको हातमा राखिदिँदै भनिन, 'पुर्याकएर खर्च गर्नु। तेरो पापाले थाहा पाए भने फेरि कराउन थाल्छन्।'

'लभ यू मामु' चार्लीले बाइक निकाल्यो । नजिकैको बौचा–मैचा शपिङ सेन्टरमा गएर मोबाइल रिचार्ज गरायो। त्यो भन्दा परको छिम्केश्वरी पेट्रोल पम्पमा गएर बाइकमा तेल हाल्यो । त्यसपछि कनिकालाई कल गर्योा, 'कहाँ छयौ ?'

उसको आवाज सुनेर कनिका फुर्किदै बोली, 'मी होम वन्ली। तिमी नि?'

उसले जवाफ दियो, ल सेम प्लेसमा आऊ। मी वेटिंग बेबी।'

त्यसपछि उ सेम प्लेसमा पुग्यो । मृग जस्तै फुत्रुक फुत्रुक उफ्रिँदै कनिका आई। दायाँबायाँ केही नहेरी ऊ लिपिक्क टाँसिइ चार्लीसँ । साथका लागि खरिएका थिए दुवै। एकछिनपछि कनिकाले भनी, लेट्स मुभ।

चार्लीले आँखाले सोध्यो, व्हेयर ?

दुवै केही बोलेनन्। कनिकाको डेस्टिनेशन चार्ली थियो। मात्र चार्ली। जहाँसुकै लगोस् चार्लीले उसलाई मतलब थिएन। चार्लीले बाइक मोड्यो बौद्धतिर। केही बेरमा उनीहरु स्तुपा क्याफेमा थिए।

चार्लीको मनमा औडाह छुटेको थियो। ऊ कनिकालाई आफूले देश छाड्न लागेको सुनाउन चाहन्थ्यो। कहाँ बाट शुरु गर्ने? उसले बिगिनिङ पोइन्ट फेला पार्न सकेको थिएन। क्याफेमा कनिका चार्लीको काखमा टाउको राखेर लुपुक्क सुतेकी थिइ। उसको इमोसनले मौन एक्सप्रेसन पाएको थियो।
चार्लीले आफना भावनाहरुलाई ठूलो ढुंगाले थिचेर भन्यो, 'कोनी, आइ हायभ डिसाइडेड टू मुभ आउट अफ दि कन्ट्री ।'

सुनेर कनिका उत्तेजित भइ, 'ह्वाट, ह्वाट, ह्वाट ? बट ह्वाई ?'

चार्ली केही बोलेन । किनभने, ऊ आफनो कथा सुनाएर कनिकालाई दुःख दिन चाहँदैनथ्यो। रोजगारीको अवसर वढाउने सरकारी भाषण सुनेर ऊ दिक्क भै सकेको थियो। उसका यही

शहरमा बस्ने आधा दर्जनभन्दा बढी साथी विदेशिइ सकेका थिए। ती मध्ये एउटा साथीको मद्दतले कतार हानिन थालेको थियो।

उसले भन्यो, 'हो कोनी, आइ एम फ्लाइङ्ग नेक्स्ट वीक वन्ली ।'

कनिका ट्वाल्ल परेर उसको अनुहारमा हेर्न थाली। उनीहरुले मगाएको कोल्ड कफी टेवलमा राखेको राख्यै रनक्क तातिसकेको थियो।

# ७. म जाने दरवारमार्ग, तिमी गयौ विदेशतिर



अम्बर गुरुङले देहत्याग गरेको दिन चार्ली एयरपोर्ट इमिग्रेसनमा वैदेशिक रोजगारमा जाने युवाहरुको लाममा उभिएको थियो। उसले दुई चार पटक लोकल हवाई यात्रा गरेको थियो काठमाडौं–पोखरा र पोखरा–काठमाडौंको। तर अन्तर्राष्ट्रिय उडानमा यो पहिलो अनुभव थियो उसको। झण्डै एक घण्टा उभिनु पर्यो इमिग्रेसनको त्यो लाममा। खाँदाखाँद मानिस देखेर चार्ली एकपटक त आत्तिएको थियो। त्यहाँ उभिएका बेला अम्बर गुरुङका गीत गुन्जिइ रहेका थिए उसको कानमा।

इमिग्रेसनको हाकिमलाई पासपोर्ट बुझाउँदा ऊ अनायास नै 'सयौँ थुंगा फूल' गुनगुनाइरहेको थियो। यो गीतलाई ऊ मूड अनुसार बुझ्ने गर्थ्यो। कहिले राष्ट्रिय गान जस्तो र कहिले

बाल गीत जस्तो। एकैछिन पछि सुरक्षा जाँचसकेर चार्ली विमानस्थलको 'नो म्यान्स ल्याण्ड' मा पुग्यो।

वेटिंग हलमा पर्खिदा उसको मनमा अनेकौ कुरा खेल्न थाल्यो। उसले विदाइको टीका लगाई दिँदै गरेकी मामुको पिटपिट्याउँदो र भक्कानिएको अनुहार सम्झियो। पापाको रोक्न खोज्दाखोज्दै रसाउन थालेका आँखा सम्झियो। र, त्यसपछि कनिकालाई सम्झियो। पछिल्लो पन्ध्र मिनेट उसले यी सबै माया र प्रेमका बन्धनहरुलाई बिर्सिने प्रयत्न गर्न थाल्यो।

विमानस्थल नो स्मोकिङ जोन थियो। उसले एउटा कुनामा स्मोकिङ जोनको संकेत देख्यो। तलतल लागेको थियो उसलाई चुरोटको। ऊ स्मोकिङ जोनमा पस्यो। उसको खल्तीको लाइटर सुरक्षाले जफत गरिसकेको थियो। तर त्यहाँ अम्मलीहरुको कमी थिएन। धूवाँले रंगमगिएको थियो स्मोकिङ जोन। चार्लीले शिखरको बट्टाबाट एउटा चुरोट निकाल्यो। एकजनाले लाइटर बाली दियो। उसको आँखा छेउमा टाँसिएको एउटा स्टिकरमा पर्यो – धूम्रपानले लिन्छ ज्यान। ऊ मन्द हाँस्यो।

जिन्दगीको के भरोसा...कनिकालाई बिर्सिने प्रयत्न गर्दागर्दै उसले यो गीतको गायकको नाम नै बिर्सियो। चार्लीलाई आफ्नै माया लाग्यो। कतारबाट कफिनमा फर्किनेहरुको थुप्रै समाचार पढेको थियो उसले। ऊ वर्तमानमा फर्किने छ कि भूत भएर? सोचेरै जिउ सिरिंग गर्यो उसको। तन्द्रामा थियो ऊ त्यतिन्जेल। फ्लाइट अनाउन्समेन्टपछि बल्ल तन्द्राबाट बिउँझियो।

चार्ली उड्नुभन्दा दुई दिन अघि नै कनिकाले बाई भनी सकेकी थिइ उसलाई। सी यू चाहीं भनेकी थिइन। के थाहा, चार्ली फर्किंदासम्म उसको अफेयर अर्कोसँग चलिसकेको हुन्छ कि? उसले बिहे नै गरिसकेकी हुन्छे कि? जिन्दगीको के भरोसा...गीतको उही बोल उसको कानमा पनि गुन्जिइरहेको थियो, जुन बोलको बोझ बोकेर चार्ली कतार उडेको थियो। खाली सन्दर्भहरु फरक थिए। कनिकाका ब्वाइफ्रेण्डहरु नभएका होइनन्।

तर, चार्लीले उसको मनको रित्तो कुनो भरिदिएको थियो। दुई दिनमा नै चार्ली उसको मनबाट हटने कुरा थिएन। तर, कनिकालाई लागेको थियो, उसको मनको त्यो कुनो फेरि रित्तिएको छ। कान्तिपुर शहरका धेरै केटीहरु एउटा ब्वाइफ्रेण्ड नभए पनि बस्न सकिन्छ भन्ने मानसिक अवस्थामा हुँदैनन्। कतिका लागि ब्वाइफ्रेण्ड व्यक्तिगत जीवनका सहयोगी हुन्छन। कतिका लागि रोमान्टिक सत्य। कतिका लागि चुरोट तान्न चाहिने साथी।

कनिकाका लागि चार्ली त्यस्तै आदर्श ब्वाइफ्रेण्ड थियो। हाँस्ने र हाँसी मात्र रहने। जति कचकच गरेपनि हुने।

चार्ली हिंडेपछि कनिकाका दिन निकै कठिन बिते। दिन कटाउनै मुश्किल पर्यो उसलाई। उसको मनपर्ने डेस्टिनेशन कफी पसल जान पनि पाइन। कोठामा बसेर गीत सुन्नु एकमात्र काम भयो उसको, 'तिमी जाने सिलीगुडी, म जाने सिक्किमतिर...' साँच्चै त्यस्तै भयो। कनिकाले यो लोकप्रिय गीतको प्यारोडी बनाइ र मन्द स्वरमा गुनगुनाउन थाली, 'म जाने दरवारमार्ग, तिमी गयौ विदेशतिर।'

# ८. मनमा गडेको माया

चार्लीसँग फ्रेण्डसिप नहुँदासम्म कनिका वाइफाईको पासवर्ड फेरे जस्तै फ्रेण्डहरु फेर्ने गर्थी। चार्ली हिंडेपछि धैरै केटाहरुले कनिकासँग फ्रेण्डसिपको आशा गरेका थिए। कसैले तारिफ गर्ने बित्तिकै रमाउने स्वभाव थियो कनिकाको।

यसपटक त्यसो भएन। चार्ली हिंडेपछि कनिकाको मन र लाइफ स्टाइल दुवै बदलियो। उदासीले ढाकेको थियो उसको मन। चार्लीलाई धैरै मिस गरेकी थिइ उसले। थाहै नपाई चार्लीको माया गडेको थियो मनमा। त्यो कोल्ड ड्रिंकको स्ट्र थिएन जो ग्लासको ड्रिंक सकिने बित्तिकै फ्याँकियोस्। मायाको फूलबारीबाट फुत्त उखेलिने बिरुवा थिएन त्यो। कनिकाले बल्ल चाल पाएकी थिइ, सी लभ्स चार्ली टू मच। जतिबेला उसलाई यो रियलाइज भयो, उ खुशीले चिच्याएकी थिइ, 'ओह, माइ गड ।' उसलाई विश्वास नै भइरहेको थिएन, ऊ कसैलाई माया पनि गर्न सक्छे।

तर, के गर्नु र ? चार्ली उडिसकेको थियो। छिट्टै फर्किने आशा थिएन। उसलाई कफीको मूड चल्यो। चार्ली उडेको दिनदेखि ऊ कुनै पनि रेष्टुराँ छिरेकी थिइन। ऊ कफी पसल पुगी। चारैतिर आँखा घुमाएर हेरी। स्मोकिंग जोनमा त्यो सीट खाली थियो जसमा ऊ र चार्ली बसेर गफ गर्थे। ऊ चार्लीसंग छिल्लिन्थी। ऊ त्यही सीटमा बसी। उसलाई व्ल्याक कफी मन पर्दैनथ्यो। तर चार्ली लंग ब्ल्याक पिउँथ्यो। उसले लंग ब्ल्याक अर्डर गरी। त्यो पनि रेगुलर होइन, लार्ज। त्यसपछि कनिकाले गरेको अर्को अचम्मको कुरा थियो स्मोकिंग। ऊ स्मोकर थिइन। चार्लीको इच्छाको कदर गर्दै स्मोकिंग सेक्सनमा बस्दथी । तर, आज भने सीटमा बस्ने वित्तिकै उसले आफनो पर्सबाट सिगरेट निकाली, सल्काइ र धुवाँका गुव्वारा

बनाउन थाली। अर्डर अनुसार उसको कफी आएपछि उसले कफीको कपमा चार्लीको अनुहार देखी र रमाई।

के चार्लीलाई पनि मेरै जस्तो मायाको रियलाइजेसन भएको होला त? उसलाई त्यस्तो लागेन। मनमनै कनिकाले आफैसँग भनी, 'चार्ली म जस्तो मायामा अल्झिने मानिस नै होइन।' त्यसपछि अर्को कप कफी मगाइ। अर्को पीस सिगरेट सल्काइ। एकछिन पछि मोवाइलमा वाइ–फाइ कनेक्ट गरी। मेसेन्जर खोली। चार्ली गएपछि पहिलो पल्ट मेसेज लेखी : हाउ आर यू चार्लु?

रमाइलो कुरा, चार्ली अनलाइन थियो, जवाफ दियो : हाउ आर यू स्वीटहार्ट ?

जवाफले उसलाई आल्हादित बनायो। चार्लीले पहिलो पल्ट कनिकालाई स्वीटहार्ट भनेको थियो।

उनीहरु अब भिडियो च्याट मोडमा थिए। चार्लीले भन्यो, 'आइ ट्राइड सेभरल टाइम टू कन्ट्याक्ट यू, बट यू आर अल्वेज अफलाइन। व्हाइ सो ?'
कनिकाले केही जवाफ दिइन। उसका आँखाबाट बलिन्द्र धारा आँसु चुहिन थाल्यो। शव्दहरु घाँटीमा अड्किए। केही बोल्नै सकिन ऊ।

चार्लीले सम्झायो, 'किन रोएकी ? यो बरिष्टाको ड्रेस मलाई सुहाएन भनेर? बट दिस इन भेरी रेस्पेक्टेड अट्टायर माइ डियर स्वीटहार्ट।'
दोस्रो पटक चार्लीको मुखबाट स्वीटहार्ट शव्द सुनेर कनिका झन भावुक भइ। उसले रुन्चे स्वरमा यतिमात्रै जवाफ दिइ, 'थ्यांक यू, लभी।'
त्यसपछि कनिका अचानक हाँस्न थाली, 'यो ड्रेस–अपमा तिमी त अचम्मको देखियौ ।'

चार्ली खुशी भयो। त्यसपछि सोध्यो, 'तिमी मलाई पर्खन्छयौ ? धेरै होइन। दुई वर्ष मात्र ।

कनिकाका ओठबाट अनायास शव्दहरु फुस्किए, 'म तिमीलाई सँधै पर्खिने छु । दुई वर्षमात्र किन ?'

चार्लीले रमाइलो गर्यो, 'हेइ स्वीटी, सँधै पर्खिएर माया कहिले गर्ने ? फेमिली कहिले बनाउने ? रमाइलो कहिले गर्ने ? सँधै पर्खिने रे । के बलिउडी डायलग बोलेको त्यस्तो ?'

त्यसैबेला एउटा ट्रेजेडी भयो। बत्ती गयो । बत्तीसँगै वाइफाइ गयो। च्याट अफलाइन भयो। कनिकाले जवाफ दिन पाइन। आफनो रमाएको अनुहार चार्लीलाई देखाउन पनि पाइन।

# ९. म हराउँ त तिम्रो स्क्रीनबाट ?

आइफोन सिक्स–एसको स्क्रीनमा कनिका चार्लीलाई खोज्दै थिइ। मेसेन्जर, व्हाट्सअप, भाइवर, स्काइप चार्ली कतै थिएन। कनिका मुर्मुरिदै थिइ, 'यस्तो हप्ताको चार दिन बेपत्ता हुने मानिसलाई दुई वर्ष कसरी पर्खिनु?' भन्न त जिन्दगी भरि पर्खिन्छु भनी हाली । तर, अहिले उसलाई लाग्न थालेको थियोे, यो सम्भव कुरा होइन। च्याटमा बोले पनि, अनुहार हेरेपनि, शरीरको न्यानोपन र श्वास–प्रश्वासको अनुभूति नभएसम्म ब्वाइफ्रेण्डको के मतलब? सबभन्दा ठूलो कुरा नै फिलिङ हो। त्यही मिस भएपछि एकोहोरो भावनाको के अर्थ? मोवाइलको स्क्रीनमा ऊ चार्लीसँग खिलखिलाएर हाँस्न सक्थी, तर लुटपुटिन सक्दिनथी। बेला बेलामा उसको मन उच्चाट्टिन्थ्यो र बेला बेलामा ऊ आफूलाई सम्हाल्ने कोशिश गर्दथी। तर, त्यो कोशिश ढलपलिन्थ्यो।

जतिबेला कनिकाले चार्लीलाई पर्खिने अठोट गरेकी थिइ, त्यतिबेला घरमा उसको ग्र्याण्डमा आएकी थिइन। उनी आएपछि उसको बिहेको चर्चा चल्ने गर्दथ्यो। उसलाई यो चर्चाको बारेमा थाहा थियो। तर उ थाहा नपाएझैं गरी दिन्थी। ऊ ग्र्याण्डमाको मन दुखाउन चाहन्नथी। ग्र्याण्डमा उसलाई माया गर्दथिन् र उसका हरेक माग पूरा गरिदिन्थिन्। मोडर्न बाबु–आमाको एउटै छोरी, खूब पुलपुलिएकी थिइ कनिका।

बाबु–आमा जतिसुकै मोडर्न र वेष्टर्नाइज्ड भएपनि नेपाली समाजमा बिहेको अनिवार्यता स्थापित छ। कनिकाकी ग्र्याण्डमा चार वर्षदेखि उसको बिहेको लागि छोरा बुहारीसँग कराइरहेकी थिइन्। उनी आफनो मौजामा बस्थिन्। परिवारको पुस्तैनी सम्पन्नताको प्रतीकका रुपमा रहेको साँचो झुत्ता उनकै कम्मरमा झुण्डिएको थियो। वर्षको सात दिन उनी काठमाडौं बस्न आउँथिन्। छोरा बुहारीले माने पनि नमाने पनि परिवारको हर्ताकर्ताका रुपमा चिनिन्थिन् उनी। एकमात्र नातिनी कनिकाको बिहेका लागि गर–गहनाको जुुगाड गरिसकेकी थिइन। कनिकाका बाबु–आमा दुवै कामकाजी थिए। उनीहरु आफैंले कमाएको सम्पत्ति पनि कुस्त थियो। उनीहरु दुवैजना कनिकाको बिहेका लागि हतारिएका थिएनन्। कनिकाले पढोस् र आफनो लागि आफैं केटो खोजोस् भन्ने चाहना थियो उनीहरुको। आमाको प्रेसरले बाबु अलिकति छटपटाएका थिए। तर, पत्नीले सहमतिमा टाउको

नहल्लाएसम्म उनी कुनै निर्णय लिन सक्दैनथे। यसपटकको कान्तिपुर बसाइमा पनि ग्र्याण्डमाले नातिनीको बिहेको कुनै निष्कर्ष निकाल्न सकिनन्। सात दिनको बसाइपछि उनी मौजा फर्किइन्।

कनिका पढ्नभन्दा कलेज बंक गरेर हिंड्न मन पराउँथी। 'दिस इज आवर लाइफ' म्यूजिकल व्याण्डकी टिम लिडर थिइ ऊ। कहिलेकाहीं गीत लेख्दथी। तर, उसका शव्दहरुमा दम हुँदैनथे। उसका साथीहरु 'वाउ, व्यूटीफूल' भन्थे र ऊ साथीहरुलाई बर्गर–पिज्जा खुवाएर रमाउँथी। जतिसुकै कलेज बंक गरे पनि ऊ एक्जाममा राम्रै गर्थी। फेल भएकी थिइन। ऊ स्वतन्त्र थिइ, जंगलको चरी जस्तै स्वतन्त्र। केटा साथीहरु फेरिरहने र केटी साथीहरुसँग झगडा गरिरहने स्वभाव थियो उसको। चार्लीसँगको संगतले उसको स्वभावमा परिवर्तन आउन थालेको थियो। चार्ली हिंडेपछि उसलाई आफनो बाटो पहिल्याउन गाह्रो परेको थियो। केही दिन उसले आफूलाई स्मोकिंगमा भुलाउन खोजी। केही दिन लेटनाइट पार्टीमा टकिला तान्दै नून चाटेर आफूलाई अल्मल्याउन खोजी। तीन दिन पोखरामा बिताइ। दुई दिन शान्तिको खोजमा लुम्विनी पुगी। कतै गएर पनि रिल्याक्स नभएपछि ऊ घर फर्किइ। सोची, बरु घरै राम्रो।

उसको फोनमा मेसेन्जरको ट्यून बज्यो। हतार हतार ऊ कनेक्ट भइ। स्क्रीनमा चार्ली हाँसी रहेको थियो। कनिका बोली, 'मलाई स्क्रीनको तिमीले पुग्दैन। तिमीलाई स्क्रीनमा हेरेर म दुई वर्ष बिताउन सक्दिनँ।'

चार्लीले जिस्क्यायो, 'त्यसो भए म हराउँ त तिम्रो स्क्रीनबाट ?'

कनिका आत्तिइ, 'के रे, के रे, मार्दिन्छु म तिमीलाई ।'

चार्लीले कनिकाको हताशा बुझेको थियो । उसले भन्यो, 'मलाई नमार । भैगो अब दुई वर्ष होइन, दुई महिनामात्र पर्ख।'

कनिकाले पत्याइन । सोधी, 'साँच्चै कि ?'

चार्लीले टाउको हल्लायो । त्यसपछि क्यारेमेल केकको प्लेट देखाएर भन्यो, 'म फर्किएपछि खाउँला है?'

कान्तिपुर गाथा : तिम्रो महिना कति विकको हुन्छ चार्ली?

उसको ओरिजिनल नाम 'अनुभव' भएपनि जिजुमुवाँले भन्न नजानेर सँधै 'अनुभोग' भनेर बोलाउँदा बोलाउँदै दाइले 'मनभोग' भनेर बोलाउन थाल्यो। दिदीले त्यही भन्न थाली। मामीले मायालु पाराले 'मेरो स्वीट मनभोग' भन्न थालिन्। स्कूलमा साथीहरुले त कति जिस्क्याए कति। सात क्लासमा उक्लिने बेलामा उसले क्लासटिचर रेवा मिसलाई चकलेट ट्रीट दिएर आफनो नाम चेन्ज गर्न लगाएको थियो। त्यो दिनबाट ऊ एबी थियो, एबी कार्की। एबीको अर्थ के हुन्छ? उसैलाई थाह थिएन। छोरोले नाम फेरेको थाह पाएपछि ड्याडीले हाँस्दै भनेका थिए, 'यू सिल्ली किड।'

स्कूलमा ऊ नयाँ भर्ना भएका केटी साथीहरुसँग आफूलाई चिनाउँदै भन्थ्यो, 'हि बेबी, आइएम सिम्प्ली एबी।'

सुनेर कनिका हाँस्थी। ऊ एबीले मात्रै बुझ्ने भाषामा बडो संगीतमय हिसावले गीत गाउँदै जिस्क्याउँथी, 'मनभोग...मन।'

त्यसपछि कनिका छडके मार्थी। एबी रन्थनिन्थ्यो। कति पटक त नर्भस नै हुन्थ्यो, त्यो पनि केटीहरुको अगाडि। एकदिन त भर्खर स्कूल भर्ना भएकी प्रतिषाका अगाडि नै ऊ नर्भस भयो।

कनिकाले त्यो स्कूल छाडी र रोसेन्थेल स्कूलमा भर्ना भइ। आधा दर्जन केटाहरुसँगको संगतपछि उसको भेट चार्लीसँग भएको थियो। चार्ली विदेशतिर लागेपछि एक्लिएकी कनिका चार्ली फर्किने खबरले उत्साहित भएकी थिइ। उसका दैनिक गतिविधिहरु बाक्लिन थालेका थिए। त्यो दिन बिहान ऊ च्याटमा थिइ चार्लीसँग। चार्लीले भनेको थियो, 'हो कनि, म फर्किंदैछु। ममको फोन आउँछ, दिनको चार पटक। तिम्रो याद आउँछ, दिनको आठपटक। बाबा बिरामी छ रे। अफिस जान पनि गाह्रो छ भन्थ्यो मम। अब दुई महिनामा कन्ट्र्याक्ट ब्रेक गर्छु।'

कनिकाले भनेकी थिइ, 'तिमी त थ्री वीक्स अघि पनि दुई महिना भन्थ्यौ। अहिले पनि दुई महिना भन्छौ। तिम्रो दुई महिनामा वीक चाहीं कतिवटा हुन्छ? सीक्स कि नाइन?'

उसको कुरा सुनेर चार्ली हाँसेको थियो र फ्लाइङ किसगर्दै अफलाइन भएको थियो।

कनिका चार्ली फर्किन्छ भन्नेमा ढुक्क भएकी थिइ। उसले आफूलाई मनपर्ने शोर्टी र स्कर्ट निकाली। बिहान अपराले फोन गरेर शेर्पा मलमा कन्सर्टमा जाने भनेकी थिइ। कफी पसलमा भेटने प्रोग्राम थियो। समयभन्दा डेढ घण्टा अघि नै निस्किइ कनिका। चार्ली

गएपछि सिगरेट र लंग व्ल्याकको तलतल लाग्न थालेको थियो उसलाई। ऊ सिगरेटको बट्टामा छापिएका स्मोकिंग विरोधी घीनलाग्दा दृश्य देखेर झस्किन्थी। तर पनि, कसरी हो कुन्नि, कन्भिन्स थिइ उ सिगरेट र लंग व्ल्याकको कम्विनेसन उसको लागि मेडिसिन नै हो।

ओहो, कफी पसल छिर्नै लाग्दा एबी र कनिकाको जम्का भेट भयो। एबीले भन्यो, 'हाइ कनिका, लंग टाइम, हाउ यु ?'

'मनभोग' लाई देखेर कनिकालाई पनि रमाइलो लाग्यो, पुरानो साथी। उसले जवाफ दिइ, 'मी गुड, फाइन, हेप्पी। बोली सकेपछि उसलाई लाग्यो क्या रिफाइन झुठ बोलियो। वास्तवमा ऊ न गुड थिइ, न फाइन र न हेप्पी। उसको अवस्था झरीमा रुझेको बिरालोको जस्तो थियो।

एवीले प्रस्ताव गर्यो, 'इफ यू हायव टाइम लेटस टक ओभर अ ग्लास अफ स्मूदी। जस्ट टू रिकल।'

कनिकाले भनी, 'स्योर, मनभोग।'

दुवै मज्जाले हाँसे र हाँस्दै कफी पसलमा उक्लिए।

कनिकाको स्टेप स्मोकिंग रुमतिर लम्कियो। एवीले भन्यो, 'यता बस्ने ?'

कनिकाले जवाफ दिइ, 'किन र ? एनी प्रोव्लेम एवी ?'

उनीहरु सीटमा सेटल भए। सर्भिस पर्सोनेल पानीको बोतल र ग्लास लिएर आयो। उसलाई कनिकाले लंग व्ल्याक मगाउने थाहा थियो। एवीले अर्डर गर्यो, 'आइस्ड लात्ते।'

कनिकाले पर्सबाट सिगरेटको प्याकेट र लाइटर निकाली। प्याकेटबाट एउटा स्टीक निकाली र सल्काइ। एवी ट्वाँ परेर उसले उडाएको धुवाँ हेर्न थाल्यो।

केही नलागेपछि विस्तारै वोल्यो, 'कनिका, यू स्मोक ?'

कनिकाले भनी, 'एनी डाउट ? यू सीईंग। मी स्मोकिंग, राइट ?'

उसले मुखबाट धुवाँको एउटा गोलो मुस्लो निकाली र एवीतिर फ्याँकी।

एवी दंगदास भो। उसको लागि यो एउटा अर्को 'नयाँ अनुभोग' थियो।

# १०. ऊ नै नभएपछि के को मज्जा?

एवी कफी पसलबाट निस्किएको केही बेरमा नै हातमा हेलमेट बोकेर आइपुगी अपरा। ऊ ग्रीन कलरको टू पीसमा थिइ। वर्षातको मौसम, उसैपनि हराभरा, हरियो। त्यसमाथि साउन लागेपछि पूरै कान्तिपुर शहर हरियो सौन्दर्यमा डुब्छ। शहरका प्रायजसो केटीहरु ग्रीन कलरमा भेटिन्छन्। ग्रीन अर्थात् कूल। धर्म र सौन्दर्य दुवै दृष्टिले। जतिसुकै फेसनेबल देखिए पनि कान्तिपुरका केटीहरुमा धर्मको आकर्षण छ। जस्तो कि, अपरा मनैले धार्मिक छे। साउनको सोमबार पशुपति मन्दिर जान मिस गर्दिन ऊ। बिहानै मन्दिर जान्छे। गणेशजीलाई लड्डु र हनुमानजीलाई सिन्दूरको प्याकेट चढाउँछे। त्यो बाहेक उसको जीवन धर्मको अरु कुनै विधिमा अल्भिकएको छैन।

कनिका जति विन्दास छे, त्यो भन्दा बढी नै विन्दास छे अपरा। तर पनि, उसले आफनो ब्वाइफ्रेण्ड मेण्टेन गरेकी छे। बेलाबेलामा घरमा बिहेको कुरा उठ्दा ऊ मसक्क मस्किन्छे। उसका ममी–ड्याडी खुशी छन्। केटीले आफनो भविष्य सोची सकेकी छ।

सोफामा बस्ने बित्तिकै अपराले कनिकाको प्याकेटबाट एउटा सिगरेट निकाली र सल्काइ। एक कप क्यापचिनोको अर्डर गरी र कनिकालाई सोधी, 'एइ, तँ केही खान्छेस्?' कनिका मुण्टो हल्लाइ, 'नाईं।' ऊ एवीका बारेमा सोच्दै थिइ, 'कस्तो चाइल्डिस क्यारेक्टरको मान्छे।' उसले एवीको अनुहार सम्झिइ र हाँसी। उसको चाला देखेर अपरा बोली, 'एइ, कनि, खुस्किइस् कि के हो?' त्यसपछि अपरा आफै हाँसी। कफी र मफिन खाइसकेपछि अपराले भनी, एइ उठ। कन्सर्टको टाइम भैसक्यो।

उनीहरु दुवै उठे र शेर्पा मलतिर लागे।

कन्सर्ट शुरु भै सकेको थिएन। आयोजकले कन्सर्ट अझै आधी घण्टा शुरु नहुने बताएपछि उनीहरुले दरवार मार्गको फन्को मार्न थाले। दरवार मार्गको फेरिएको रुप देखेर कनिकाका छक्क परेकी थिइ, 'बुझिस् अपरा, मी ए ग्रेट इडियट। मैले त सडकको बीचमा उभिएका यी ल्याम्पपोष्टहरुको त यादै नगरेकी रहेछु। तैंले याद गरेकी थिइस् त?'

अपराले जवाफ दिइ, 'मलाई तैंले आफैं जस्तो मूर्ख ठानिस कि के हो? ल्याम्पपोष्टको यत्रो लाइन पनि नदेख्ने। इमिडियटली कन्सल्ट योर अप्थाल्मोलजिष्ट।'

तर के मात्रै हेर्नु र के मात्रै सम्भिम्कनु? दरवार मार्गका आउटलेटहरुको डेकोर दिनहूँ चेन्ज भै रहन्छ। रियालिटीलाई भर्चुअल रियालिटीले विस्थापित गरेको छ। तडक–भडक भनेको त्यस्तै हो, आज एउटा छ भोलि अर्कै छ। कनिकालाई त कफी शपको लुक्स चेन्ज भएको पनि थाह थिएन। थाह कसरी हुनु? त्यस्तो फर्मल रेष्टुराँमा छिर्नै मन लाग्दैन उसलाई।

यो आधा घण्टाको बीचमा अपरा र कनिकाले दरवार मार्गको तीन फेरो मारे। बीचमा अन्नपूर्णको एटीएम लाउन्जबाट अपराले पैसा निकाली। उनीहरु रोड क्रस गरेर कन्सर्ट भेन्यूमा पुग्दा पनि शो शुरु हुने कुनै तयारी नै थिएन। अपरा काउण्टरमा पुगी शोको बारेमा सोधपूछ गर्न। म्युजिक व्याण्डका एक जोडी प्रेमी कलाकार बेपत्ता भएछन्। उनीहरु आउने–नआउने कुनै टुंगो थिएन। दुवैको मोवाइलको स्वीच अफ थियो। अपराले सोधी, 'त्यसो भए क्यान्सिल, होइन त?'

काउण्टरमा बस्नेले जवाफ दियो, 'सरी मिस। खै के भनौं र?'

कन्सर्टको रहर सेलायो दुवैको। अपराले भनी, 'अब के गर्ने?'

कनिकाले सुझाई, 'न्यूरोड जाउँ।'

ती दुवै न्यूरोड नगएको वर्ष बितिसकेको थियो। अपराले आफनो स्कूटी कान्तिपुरको डाउन–टाउनका रुपमा चिनिएको न्यूरोडतिर सोझ्याई र कनिका पछाडि बसेकी छ भन्ने विचारै नगरी हुईंक्याइ। बिचरी कनिका बल्लतल्ल सेटल भइ स्कूटीमा। न्यूरोड गेटदेखि नै शुरु भै हाल्यो न्यूरोडको भीड। दरवार मार्गको बजार गुल्जार नहुन्जेल यहीं त हुन्थ्यो शहरको सबभन्दा महंगो शपिंग।

उनीहरु वसन्तपुरको चाट बजारतिर लागे। दुइवटा मिक्सचाटको अर्डर गरेर चाट हाउसको एउटा कुनामा उभिए।

अपराले सोधी, 'के छ एइ, तेरो भालेको हालचाल? फोन त गर्छ नि?'

निन्याउरो स्वरमा जवाफ दिइ कनिकाले, 'खै के भनौ। फोन, भाइवर, स्काइप, च्याट त सँधै हुन्छ। तर उसको शरीरको तातो नपाएसम्म, ऊ अगाडि नभएसम्म मजा नै नआउने क्या मोरी। खोई दुई महिनामा फर्किन्छु भनेको पनि पाँच हप्ताभन्दा बढी भै सक्यो, अहिलेसम्म पनि दुई महिनामा फर्किन्छु भन्न छाडेको छैन।'

कनिकाको अनुहार हेरेर अपरा हाँसी र भनी, 'हेर व्वाई फ्रेण्ड भनेको चाहिन्छ क्या। त्यसको शरीरको गन्धले नै ताजा बनाउँछ। म त विषम कतै गयो भने टिक्नै सक्दिन। चार–पाँच दिन बिताउन पनि कस्तो अनइजी फिल हुन्छ।'

यस्तो कुराले कनिकालाई झन टोक्छ। उ सोच्न थाल्छे, दुई महिनामा आउँछु भनेको चार्ली छ महिनामा पनि आएन भने उसले के गर्ने? चार्लीको विकल्प अरु कुनै केटा हुनसक्छ भन्ने उसले सोचेकै छैन। साँच्चै के गर्ने होला? कनिका आत्तिन्छे।

कनिकाको समस्या थाह भएर पनि कुनै सल्लाह दिने अवस्थामा थिइन अपरा। उसले के सुझाव दिने? अपरा अलमलमा थिइ। वातावरणलाई रमाइलो बनाउन अपराले भनी, 'चिन्ता नगर, चार्ली आएन भनेपनि चार्ली जस्ता केटा त जति पाइ हाल्छेस।'

अपराको कुरा सुनेर कनिकालाई उसको मुख च्याती दिउँ जस्तो लाग्यो। उ केही बोलिन। अपराले थाहा पाउने गरी रिसाइ मात्र।

फर्किने होइन? अपराले सोधी। कनिकाले भनी, 'आइ वील स्टे फर सम मोर टाइम। यु क्यान गो इफ यू लाइक।'

अपराले कुरा बुझी। उसले स्कूटर स्टार्ट गरी र वडवडाइ, 'फ..वीच।'

स्कूटर कनिलाई छाडेर मूल सडकमा दौडियो।

कनि चार्लीलाई आफनो आँसु देखाउँदै थिइ भिडियो च्याटमा।

# ११. यी हेर, म तिम्रो गिफ्ट

कतार उडेको ठीक तीन महिनापछि पन्ध्र दिनको विदामा कान्तिपुर फर्कियो चार्ली। उसले आफू आउने खबर कसैलाई गरेन। न घरमा गर्‍यो, न कनिकालाई नै। ऊ ममी, ड्याडी, कनिका र साथीहरु सबैलाई सरप्राइज दिन चाहन्थ्यो। ममीले दिनहुँ फोन गरेर ड्याडी विरामी भएको नसुनाएको भए ऊ आउने पनि थिएन। कम्पनीले उसलाई दुई वर्षको कन्ट्र्याक्टमा राखेको थियो। ऊ आधा दर्जन वरिष्टाको सुपरभाइजर थियो।

वरिष्टाहरुलाई कफी लभरहरुको चाहना अनुसार कफीको स्वादमा डुबाइदिन पोख्त थियो चार्ली। उसले तीन महिनामा नै कम्पनीमा आफनो हैसियत बनाइसकेको थियो। कामदारहरुको बीचमा ऊ लोकप्रिय थियो। ग्राहकहरुले पनि मन पराउँथे। कफी स्टोरमा केटी ग्राहकहरु कमै आउँथे। जति आउँथे ती क्वालिटीका हुन्थे। एउटी थिइ आयशा। कफी स्टोरमा पस्ने बित्तिकै ओपन स्पेसमा पस्दथी र आफनो बुर्का उतार्थी। त्यसपछि मार्लबोरो सिगरेट सल्काउँथी। उसलाई प्रायः चार्ली नै एटेण्ड गर्थ्यो। आयशाको दुई–तीन भिजिटमा नै चार्लीले उसको टेष्ट थाहा पाइसकेको थियो : क्यापचिनोसँग सिनामम रोल। स्टोरका केटाहरुले चार्लीलाई जिस्क्याउन थालिसकेका थिए – 'ल है, चार्लीको चाला निको छैन।'

कान्तिपुर फर्किदा हवाइजहाजमा आयशालाई सम्झिइरहेको थियो चार्ली। त्यो केटी इस्लाम धर्मावलम्वी नभएकी भए चार्लीले पक्कै पटाउँथ्यो। चार्लीको े ट्रेजेडी नै हो ऊ जे मन पराउँछ त्यो उसको हुँदैन। आयशा कफी पिएपछि आफनो ओठमा लिपष्टिक मिलाउँथी र आँखीभुईंमा आइलाइनर दल्थी। चार्ली सोच्दथ्यो, 'पूरै अनुहार त बुर्काले छोपिएको हुन्छ। मेकअप चाहीं कसलाई देखाउन गरेकी होली?' स्टोरको ओपन स्पेसमा ऊ एकघण्टा जति बिताउँथी। तीन चार स्टीक सिगरेट तान्थी। त्यसपछि हिंड्थी।

तर्कनाहरुको संसारमा रमाउँदा रमाउँदै चार्लीले प्लेन कान्तिपुरमा ल्याण्ड गरेको चालै पाएन। जहाजबाट उत्रिने बेलामा यात्रीहरु सँधै हतारमा हुन्छन्। मानौं कि नहतारिए प्लेनबाट ओर्लिनै पाइँदैन। चार्ली सबैभन्दा पछाडि ओर्लियो। उसले ह्याण्डक्यारीमा एउटा सानो व्रिफकेस ल्याएको थियो। ममी र कनिकाका लागि केही गिफ्ट थिए। उसलाई कुनै हतार थिएन। जहाजबाट ओर्लिएर इमिग्रेसनसम्म पुग्दा उसलाई कान्तिपुर अलिकति बदलिएको जस्तो लाग्यो। त्यस्तो केही बदलिएको थिएन। तीन वर्षमा त केही नबदलिने शहर तीन महिनामा के बदलियोस्? यो चार्लीको भ्रम मात्र थियो।

इमिग्रेसनमा क्यू लामै थियो। काउण्टर पनि व्यवस्थित थिएन। झण्डै पैंतालिस मिनेटपछि चार्लीको पालो आउँदा ऊ झल्लु भै सकेको थियो। कान्तिपुर साँच्चै गज्जबको शहर छ। यहाँबाट निस्किन जति गाह्रो हुन्छ, पस्न पनि त्यत्तिकै गाह्रो हुन्छ। आगमन र निर्गम दुवैमा कठिनाई। काउण्टर क्लर्कले चार्लीको पासपोर्टलाई ओल्टाइ–पल्टाइ हेऱ्यो। त्यसपछि एउटा पानामा सरकारी छाप ठोकी दियो। चार्ली त्यो काउण्टरबाट मुक्त भयो। भन्सारमा उसले कुनै दंगल गर्नु परेन । एक्सरे मसीनले उसको व्रिफकेस निरापद भएको प्रमाणित गऱ्यो। आगमनका विधि र प्रक्रियाहरु पूरा गरेर चार्ली खुला आकाशमा निस्कियो। त्यसपछि एउटा ट्याक्सीसँग बार्गेनिङ गरेर हजार रुपियाँमा ऊ अपरान्ह पाँच बजे सकुशल घर पुग्यो।

उसले घरको ढोकाको बेल बजायो। ढोका ममीले खोलिन्। ढोकामा ठींग उभिएको छोरोलाई देखिन्। एकछिन त उनी ट्वाल्ल परिन्। बिचरीले विश्वासै गर्न सकिनन्। त्यसपछि उसलाई घरभित्र तानिन् र अंगालो मारिन्। चार्लीका ड्याडी बैठकमा बसेका थिए। उनको शरीर खिसिक्क थियो। अनुहार मलीन। चार्ली सरासर गएर ड्याडीलाई अंगालोमा कस्यो। उनले चार्लीको कपाल सुमसुम्याए। निकै बेरसम्म तीनैजना चुपचाप एकअर्कालाई हेरी रहे।

साँझ छ बजे उसले कनिकालाई फोन गऱ्यो। कनिकाले फोन उठाउनासाथ प्रश्न गरी, 'तिमी कहिले आउने भन्या ?'

चार्लीले जवाफ दियो, 'अहिल्यै आउँ त ?'

कनिकाले भनी, 'नजिस्क न प्लिज । साँच्ची भन न तिमी कहिले आउने ?'

चार्लीले जवाफ दियो, 'ल, मैले तिमीलाई एउटा गिफट पठाइ दिएको छु। अहिले सात बजे अखडामा गएर कलेक्ट गर्नु है।'

चार्लीले फोन राखी दियो । त्यसपछि उ कफी पसलतिर लाग्यो कनिकालाई ल्याइदिएको गिफ्ट बोकेर। कनिका सात बज्नुभन्दा केही अगाडि नै आइपुगी। ऊ पसलको चारैतिर आँखा घुमाउन थाली। चार्ली अलिकति छेकिएर बसेको थियो। उसमाथि कनिकाको नजर परेन। ऊ स्मोकिंग जोनमा गएर बसी ढोकालाई पिठ्युँ फर्काएर। चार्ली लुसुक्क भित्र पस्यो र कनिकाको अगाडिको सीटमा थ्याच्च बस्यो र नाटकीय ढंगले आफनो नाकमा औंला राखेर भन्यो, 'यी हेर, म तिम्रो गिफ्ट।'
कनिका सरप्राइज्ड भइ, पज्जल्ड । यो उसको जीवनकोे पहिलो र महत्वपूर्ण सरप्राइज थियो ।

# १२. कति रोमान्टिक भएको तिमी!



चार्ली फर्किए पनि कनिका त्यति खुलेर खुशी हुन सकेकी थिइन। ऊ मात्र दुई साताका लागि फर्किएको थियो। चार्लीका ममी–ड्याडी पनि त्यति खुशी थिएनन्। ऊसका ड्याडी चाहन्थे - ऊ कान्तिपुरमा नै काम गरेर बसोस्। तर, चार्ली आत्मनिर्भर बन्न चाहन्थ्यो। दुईचार वर्ष पैसा कमाएर देश फर्किने विचार थियो ऊसको। ड्याडीले खटाएर दिएको पैसा खर्च गरेर कान्तिपुर शहरमा हल्लिनुको कुनै मजा थिएन। बाबु–आमाको इमोसनल व्ल्याकमेलिङ र कनिकाको समर्पणले ऊसलाई खासै प्रभाव पारेको थिएन। बेलाबेलामा बुढ्यौलीले छोएका आमा–बुबाको हेरविचारको चिन्ता लाग्थ्यो चार्लीलाई। तर, मायाले मात्रै त भएन। पैसा भएन भने केही हुने होइन। कनिकाको मायाले चार्लीलाई बेलाबेलामा मनमा अप्ठ्यारो पार्दथ्यो। त्यस्तो बेला ऊ आफ्नो मनलाई बिस्तारै थुम्थुम्याउँथ्यो।

चार्ली फर्किएको पाँच दिन भइसकेको थियो। छैठौं दिन ऊ कनिकासँग डेटिङमा निस्कियो। ऊसले आफ्नो बाइक सर्भिसिङ गराएर टिलिक्क पारेको थियो। आफू पनि पोलोको कालो टिसर्ट र जिन्समा सजिएको थियो। कनिका नीलो रङको टप र जिन्समा निकै आकर्षक देखिएकी थिइ। कानमा अर्मानीको टप सुहाएको थियो ऊसलाई। ऊ बाइकमा बसेपछि चार्लीले कुदायो कालिमाटीतिर। यतिन्जेल केही नबोली बसेकी थिइ कनिका। बाइक कालिमाटीबाट दक्षिणकालीको बाटो लागेपछि सोधी, 'कहाँ जाँदैछौं हामी?' चार्लीले सुनेन। ऊ एकनासले बाइक चलाइरहयो। कनिका पनि चार्लीसँग लिपिक्क टाँसिइरही।

हात्तीवनको ऊकालो कटेपछि चार्लीले बाइक रोक्यो। ऊनीहरु पहाडको सानो डिलमा ऊभिए। चार्लीले कनिकाको ध्यान तल फाँटतिरका नयाँ बनेका बस्तीहरुतिर एकोहोर्‍याउँदै भन्यो, ‘कस्तो लाग्यो त?’

कनिकाले स्वच्छ आकाशतिर आँखा दौडाउँदै जवाफ दिइ, ‘मलाई त सफा आकाश नै मन पर्छ।’

कनिका यतातिर कहिल्यै आएकी थिइन। कान्तिपुर शहरको रिमिझिमीमा रमाएकी केटी पहाडका मनोरम दृश्यहरु देखेर मोहित भएकी थिइ। आफ्नो घरबाट यति नजिकै यस्ता दृश्यहरु हेर्न पाइन्छ भन्नेसम्म थाहा नपाएकोमा ऊ पछुताउँदै थिइ।

दश मिनट सुस्ताएपछि चार्ली बाइकमा बस्यो। कनिका बाइकमा बस्न लाग्दा चार्लीले ऊसलाई झुक्याएर ओठैमा माइल्ड किस गर्‍यो। कनिकाको पूरै शरीर सननन्न भयो। ऊसले भनी, ‘कति रोमान्टिक भएको तिमी।’

चार्लीको बाइक कुद्दै फर्पिङबाट दक्षिणकालीतिर लाग्यो। कनिकाले सोची, ‘मन्दिर जाने होला। मन्दिरमा पनि के डेटिङ आएको होला।’ बाइक मन्दिरमा पनि रोकिएन। छैमले गाउँ छिचल्दै रिजोर्टमा गएर रोकियो।

रिजोर्टको वातावरणले कनिकालाई भावुक बनायो। आफै सिंगारिएकी प्रकृतिलाई मानिसले आफनो रुची अनुसार सजाएका थिए। नजिकै बगेको सानो खोलाको समानान्तरमा एऊटा कृत्रिम झरना बनाइएको थियो। आफै सुन्दर केटीलाई व्युटिसियनले सजाएर निखार दिए जस्तो।

चार्लीले रिजोर्टमा रुम बुक गरेको थियो। ऊनीहरु रुममा पुगे। चार्लीले सोध्यो, ‘तिमीलाई भोक लागेन कनि?’ ऊनीहरुले लन्च अर्डर गरे। कनिकाले अचानक चार्लीलाई चपक्क समातेर किस गर्न थाली। चार्लीका लागि यो नयाँ कुरा थिएन। कनिका यस्तो मामिलामा निकै खुला थिइ।

आधा घण्टापछि रेष्टुराँले लन्च तयार भएको सूचना दियो। ऊनीहरु रेष्टुराँतिर लागे। लन्च निकै स्वादिलो थियो।

रुममा फर्किएपछि कनिका चार्लीसँग लुटपुटिन थाली। चार्लीले बुझेको थियो कनिकाको इच्छा र आशय। तर, ऊ त्यसका लागि तयार थिएन। ऊ जीवनका केही व्यवहारिक विषयका बारे कनिकासँग कुरा गर्न चाहन्थ्यो। तर, कनिका चार्लीको शारीरिक स्पर्शमा डुबेकी थिइ। ऊ माया बाहेक अरु कुरै सुन्न तयार थिइन। आवेग थियो ऊसमा। चार्ली ऊसलाई खुशी राख्न चाहन्थ्यो। त्यसैले ऊसले कनिकालाई केही सुनाएन। बिस्तारै ऊ पनि कनिकाको आवेगसँगै बहकिन थाल्यो। ऊनीहरु आफैंमा यति लिप्त थिए कि समय घर्किएको पनि थाहा पाएनन्।

साँझपख चार्लीले भन्यो, 'अब जाने होइन?'

कनिकाले भनी, 'कहाँ जाने ? आज यहीं बसौं न हुन्न?'

चार्ली केही बोलेन। दुवैले एक–अर्काको मनको भाव बुझेका थिए।

त्यसपछि कनिकाले घरमा फोन गरी, 'आज चार्लीसँग बस्छु। यता घुम्न आएको अबेर भयो।'

कनिकाको भनाईले चार्ली झस्कियो।

कनिकाले घरमा आफ्नो प्रेम र समर्पणको पर्दा खोलिसकिछ। ऊसले यसका परिणामका बारेमा विचार गर्‍यो। त्यसपछि मनमनै चित्त बुझायो, 'जे होस् होस्। दुई वर्ष पर्खिन भनेकै छु। दुईको सट्टा तीन वर्ष त होला।'

# १३. सिमसिम पानीमा शहर



कान्तिपुरमा वर्षातको मौसम त्यति नरमाइलो हुँदैन। पानी लगातार पऱ्यो भने अलि बोर हुन्छ। पानी पर्दै, घाम लाग्दै गऱ्यो भने मानिसले खोजेको भन्दा बढी आनन्द पाउँछ। कनिकालाई सिमसिमे पानी मन पर्छ। सिमसिमे पानीको सुख भनेको शहरमा धूलो नउड्नु पनि हो। भिज्न पनि खासै भिजिँदैन। समय गुम्सिँदा पनि गुम्सिँदैन। उसै पनि कनिका निसास्सिएकी छ। दुई दिनदेखि चार्लीले उसलाई बाल दिएको छैन। कतार फर्किने तयारीमा उ आफना बाबु – आमालाई फकाउँदैछ। यस्तोमा दिनभर पानी पऱ्यो भने कनिकाको हालत के होला?

'विचरी म' कनिका आफैसँग सुकसुकाउँछे। दुई दिनदेखि चार्लीले देखाएको निगेटिव एटिच्यूडले उसलाई निरास बनाउन थालेको छ। उसले थाह पाइसकेकी छ : चार्लीसँगको उसको प्रेम सोचेजति सहज छैन। चार्लीले भनेजस्तो उसले दुई वर्ष पर्खिए पनि प्रतिफल केही पाउने छैन। विना अर्थ किन पर्खिनु चार्लीलाई ? यत्रो कान्तिपुर शहरमा चार्लीमात्रै उसलाई मनपर्ने केटा होला र ? कनिका बिचलित हुन्छे। एकमन उसलाई लाग्छ, चार्लीमात्रै उसको साथी बन्न लायक केटा होइन। अर्को मनले भन्छ, चार्ली जस्तो केटो त तैँले पाउनै सक्दिनस् कनिका।

फोनको घण्टी बज्छ। चार्ली। उ फोन उठाउँदिन। रिङ टोन फेरि दोहोरिएर बज्दछ। उ फेरि फोन उठाउँदिन। त्यसपछि चार्लीको मेसेज आउँछ, 'व्हेर द हेल यू आर कनी? आइ एम प्लानिङ सम फन दिस इभिनिंग...'

मेसेज पढेपछि कनिका फुरुङ्ग पर्छे र फोन गर्छे। कहाँ थियौ ? चार्लीले सोध्नेबित्तिकै जवाफ दिन्छे, 'फ्रेस हुँदै थिएँ।' उ वार्डरोवबाट चार्लीलाई मनपर्ने मरुन कलरको टप निकाल्छे। नयाँ लेहङ्गा लगाउँछे। ऐनामा आफैँलाई हेर्छे र आफैँ पुलङ्कित हुन्छे।

घरबाट बाहिर निस्केपछि कनिका अस्वाभाविक रुपमा भावुक बन्छे। उसलाई लाग्छ, यत्रो कान्तिपुर शहरमा मेट्रोको सुविधा छैन। गल्लीगल्लीमा मेट्रो चलाउँछु भन्ने नेतालाई पनि भर्खरै हटाएका छन्। कुनै पनि सुविधा नभएको यो शहरमा कति गाह्रो छ बाँच्नु। कनिका निमेषभरमा चार्लीसँगै विदेशिने कल्पना गर्दछे। कति रमाइलो हुन्थ्यो होला जीवन। चार्ली र म। म र चार्ली।

उसको अगाडि चार्लीले बाइक रोक्छ। कनिका सपनाको संसारबाट बाहिर आउँछे। बाइकमा बस्छे। चार्ली महाराजगन्जतिर दौडाउँछ बाइक।

केही बेरपछि दुवै अल्लादिन क्लबमा नाचिरहेका हुन्छन्। म्युजिक अनौठो छ, सफ्टबाट एक्स्ट्रिम पीचतिर। स्याक्सोफोनको सुन्दर तरङ्गमा निकैबेर नाचेपछि चार्ली र कनिका बारतिर लाग्छन्। तकिलाको दुई दुई सटपछि फेरि फ्लोरमा फर्किन्छन्।

झण्डै दुई घण्टापछि थाकेका ती दुवै आत्मा डिनर टेवलतिर लाग्छन्। अचानक बत्ती झ्याप्प निभ्छ। एकछिन डान्स फ्लोरमा कोलाहल मच्चिन्छ। यो अन्धकारको फाइदा उठाउँदै कनिका र चार्ली एक्स्प्लिसिट किसमा रमाइरहेका हुन्छन्। बत्ती जसरी अचानक झ्याप भएको थियो त्यसरी नै बल्छ। त्यतिन्जेलसम्म चार्ली र कनिका भावनाको बेहोसीबाट व्युँझीसकेका हुन्छन्।

'एक राउण्ड तकिला ?' चार्ली सोध्छ।

'नाईं तकिला। अव एव्सोल्युट भोद्का,' कनिका बोल्छे।

रात मात्तिँदै जान्छ। चार्ली र कनिका आफ्नै मोहक अवस्थामा रमाइरहेका हुन्छन्। त्यसपछि बार बन्दहुने समय आउँछ। रातको एकबजे।

चार्ली बिस्तारै बाइकको ह्याण्डिल समात्छ। कनिकालाई पछाडि राखेर उ बिस्तारै गन्तव्यतिर लाग्छ। बीचैमा उ झसङ्ग हुन्छ, ओह माइ गड। आजको गन्तव्य त घर हुनै सक्दैन।

उ बाइकलाई अल्लादिनतिरै फर्काउँछ र त्यहीँको एउटा रुम रेन्ट गर्छ।

उनीहरु विस्तारै भऱ्याङ उक्लिन्छन् र कोठामा पुग्छन्। बेडमा ढल्किँदै कनिका भन्छे, ‘मलाई छाडेर नजाउ है तिमी।’

चार्ली भन्छ, ‘मलाई दुई वर्ष पर्ख है तिमी।’

# १४. शरीरमा अभिव्यक्त नहुने प्रेम त के प्रेम



कनिकाले जतिसुकै अनुनय गरे पनि चार्ली भुर्र उड्यो कतारतिर। बाबु–आमाले लाख सम्झाए। तर, उ भने काम गरेर आफनो जीवन आफ्नै बाहुबलमा बाँच्न चाहन्थ्यो। स्वतन्त्र भएर आफनै वुतामा उभिनुको मजा नै अर्कै हुन्छ। त्यसो त, बाबु–आमाको सम्पत्ति नभएको होइन। मनग्गे पुग्छ चार्लीलाई। पुर्ख्यौली सम्पत्तिमा मस्ती मार्नुमा त्यति आनन्द छैन जति आफनो मेहनतले कमाएको पैसा खर्च गर्नुमा छ। त्यस्तो आनन्द नै बेग्लै हुन्छ। स्वतन्त्रता भावुकता मात्रै होइन। व्यवहारमा नै मानिस स्वतन्त्र नभएसम्म त्यस्तो स्वतन्त्रताको माने छैन। चार्लीले यति कुरा बुझेको छ। उसलाई थाहा छ, हुर्किएको छोरोले कपाल कन्याउँदै बाबुसँग पकेट खर्च माग्नु कति खतरनाक हुन्छ। पैसासँगै बाबुले दिने अर्ति–उपदेश सँधै रमाइलो हुँदैन। हरेक वीक–एण्डमा आमासँग लुटपुटिएर माँगेको पैसाले वीक–एण्डको आनन्द दिँदैन।

चार्ली बिमान बसेर बाबुका बारेमा सोच्छ। कता कता उसलाई लाग्दछ उसका बाबुले अब दुई वर्षभन्दा बढी जीवन धान्न सक्दैनन् होला। यो सोचाइले नै उसलाई कहाली लाग्दछ। किन त्यति कमजोर देखिए उसका बाबु ? कतै उनलाई ठूलै रोग त लागेको होइन ? उ आफै आफ्नो चित्त बुझाउँछ। त्यसो त होइन होला। आमालाई केही न केही त थाहा हुनुपर्ने हो। एउटै छोरो भएकाले मात्रै बाबु–आमाले उसलाई रोक्न खोजेका त होइनन् होला। त्यसपछि उ कनिकालाई सम्झिन्छ। त्यो केटीलाई उसले फसाउन खोजेको होइन। साँच्चै मायाँ बसेको छ उसको कनिकासँग। त्यत्रो विश्वासका साथ आफ्नो शरीर सुम्पिने केटीको मायाँ नगरेर उ के गरोस्। तर, मायाँ भनेको चाट्नु र लुटपुटिनु मात्र पनि त होइन। मायाँ जीवनको उद्देश्य हो। एउटी मायालु, सुन्दर र सुखी परिवार। कनिकाप्रति चार्लीको भरोसा बढेको छ यसपटक। त्यो केटीले पक्कै पनि दुई वर्ष पर्खिन्छे मलाई। चार्ली रमाउँछ।

विदेश फर्किन लागेको चार्लीसँग भेट्न सक्दिन कनिका। मुटुमा गाँठो नै परेर आउँछ। उसले चार्लीको मोबाइलको क्यालेण्डरबाट उ फर्किने दिन थाहा पाएकी थिइ। उसले चार्लीसँग केही सोधिन। उसलाई थाह थियो, चार्ली केही नबताइ लुसुक्क हिँड्छ। उ पनि फेस गर्न सक्दैन कनिकालाई। चार्लीले छोड्दैन भन्नेमा कनिकालाई विश्वास नभएको होइन। तर, समयको दूरीसँग सम्झौता गर्नु कठिन हुन्छ उसका लागि। यता दुई साता होइन, दुई दिन बिताउन त गाह्रो हुन्छ। दुई वर्ष त धेरै लामो समय भइहाल्यो नि।

चार्ली जतिबेला दोहा विमानस्थलमा उत्रिँदै थियो त्यतिबेला कनिका कोठामा धुम्धुम्ती बसेर सिनेमा हेर्ने प्रयास गर्दैथिइ। उसले हिन्दीका आधा दर्जन र अंग्रेजीका आधा दर्जन सिनेमा हेर्ने प्रयत्न गरी। मन कुनैमा जमेन। उ दुःखान्त सिनेमामा रमाउन सक्दिनथी। हँसाउने सिनेमामा पनि मन बसेन। एउटा छोटो सिनेमा हेरी - स्मूदी। त्यो स्मूदी र आइसक्रिममा रमाउने केटाकेटीको सिनेमा थियो। उ आफैसँग हाँसी र भनी, 'आइएम टू ओल्ड टू वाच दिज किड्डी।' उसले आफ्नो छातीका उभारतिर हेरी। चार्लीसँग अल्लादीनको कोठामा रमाएको रात सम्झिइ। साँच्ची, यो मायाँसँगै धेरै कुरा प्याकेजमा नै आउने। अँगालोमा रमाउनु पर्ने, कता कता शरीरका सबै अवयवमा किस खान मन लाग्ने, शरीर जुनसुकै बेला उसँग टाँसिनपर्ने, के के हो के के। यी सबै शारीरिक चपलता नहुने भए पर्खिनु मात्रै त के थियो र ? उ चार्लीलाई दुई होइन, चार वर्ष पर्खिन्थी। कनिकाले सोची, शरीरमा अभिव्यक्त नहुने प्रेम त के प्रेम भो र ? त्यो त पूरै धर्म भइहाल्यो। आकाशको तारा टिपेर ल्याउने जस्तो वित्पाते कुरा।

कनिकाको मनमा नेक कुरा खेलिरहेका बेला उसको फोनमा मेसेन्जरको टोन बज्यो। चार्ली भिडियो कलमा मुस्कुराइरहेको थियो।

कनिकाले रिसाएको अभिनय गरी, 'जानेबेलामा बाई पनि नभन्ने, बोल्दिन।'

चार्लीले भन्यो, 'बोल्छयौ क्या बोल्छयौ। तिमी रिसाएको र नाटक गरेको म बुझिहाल्छु।'

कनिका हाँसी, 'बोल्नै पऱ्यो नि। अब दुई वर्ष यसरी नै कटाउनुपर्ने होला। होइन?'

चार्लीले हाँस्दै जवाफ दियो, 'कहाँ दुई वर्ष। तीन महिनापछि त फेरि आइहाल्छु नि। अल्लादीनको रात सम्झियो कि फर्किन मन लागिहाल्छ।'

कनिकाले केही बोल्न नपाउँदै चार्लीले भन्यो, 'कष्टमर आयो। वील कल यू आफ्टर सम टाइम।'

कनिका मोबाइलको स्क्रीन नियाल्न थाली, 'हाउ स्वीट।'

# १५. रिपोर्टर कनिका



चार्ली कतार उडेपछि फेरि शुरु भयो कनिकाको उद्‌विग्न मनको उदास यात्रा। कान्तिपुर शहरमा कहिले दरबारमार्ग, कहिले पुतलीसडक त कहिले ठमेल। कहिले कफी, कहिले स्मूदी र कहिले तकिला। हरेक दिन ऊ आफ्नो मन दह्रो पार्थी चार्लीको सम्झनामा नझोक्राउन। तर उसको बनेको मन बेला-बेलामा भत्किइहाल्थ्यो ।

कम्तीमा पनि दुई वर्षका लागि ऊ चार्लीलाई चटक्क बिर्सिन चाहन्थी। तर, जति कोसिस गरे पनि त्यसो गर्नु सम्भव नै भइरहेको थिएन। ऊ आफैं हैरान थिई- के जादू गऱ्यो चार्लीले यस्तो?

उसलाई थाहा थियो, यसरी लग्गु भएर चार्लीलाई नै सम्झिइराख्नु, मेसेन्जर वा भाइबर कलमा उसलाई पर्खिराख्नुको कुनै तुक थिएन। तर, मन हो, यो कसैको वशमा हुँदैन। न त यो बाँधेर बाँधिन्छ, न रोकेर रोकिन्छ। मानिसका लागि मायाको सम्झना नदीको पानीमा देखिने तीव्र प्रवाह जस्तै हो। प्रवाह कहिले थामिन्छ र कहिले छाल बनेर फर्किन्छ; कसैले भन्न सक्दैन। प्रवाह थामिए पनि पानीमा त्यसका असरहरु निकै लामो समयसम्म देखिन्छन्। कनिका आफनो चित्त बुझाउन खोज्थी। तर मन भने गीत जस्तै दोहोरिइरहन्थ्यो–

‘जति बिर्सूँ भन्छु उति सम्झिने झन्
फगत एक नजरमा कसैले लियो मन...’

कनिका बाटोमा बहकिइरहेको बेला एक दिन अचानक भेटिई सुदिप्ती। ब्वाई फ्रेण्डसँगको ब्रेकअपपछि ऊ पनि पागल जस्तै भएकी थिई कुनै बेला। कनिकाको र उसको कहानी भने बेग्लै थियो। सुदिप्तीले भोगेको छटपटी र कनिकाले भोगेको छटपटी उस्तै भए पनि सुदिप्तीको ब्रेकअपको कारण ऊ आफैं थिई। निकैपछि मात्र सुदिप्तीले आफूलाई सेटल गरी। उसले एउटा सानो न्युजपेपर चलाउन थालेकी थिई, ‘दि अब्जर्भर’।

तन्नेरी पुस्ताका मानिसहरुको समाचार छापिने यो न्युजपेपर युवा समाजमा निकै चर्चित थियो। कनिकाको कुरा सुनिसकेपछि सुदिप्तीले उसको कथामा समाचारको एंगल खोजी र भनी, ‘व्हाइ डोण्ट यू राइटडाउन एभ्री थिङ, फ्रम टप टु बटम, विटविन? इट वील वी इन्ट्रेस्टिङ टू शेयर।’

सुदिप्तीले भनेजस्तो कनिका लेख्नका लागि तयार भई। तर, ऊ सुदिप्तीले खोजे जस्तो आफनै कुरा लेख्न चाहन्नथी। उसले सोधी, ‘भन त यार, मैले मेरै कुरा लेख्नु जरुरी छ र? आइ जस्ट वान्ना राइट। नट पर्सनल। उड यू हेल्प मी?’

कनिकाले स्थानीय समाचार लेख्ने भई। सुदिप्तीले सुझाई, 'साउनको सोमबार पशुपतिमा लाग्ने भिडको बारेमा लेख्ने; तेरो मूड पनि फ्रेस हुन्छ। मोडर्न वीमेनहूडको कथा पनि आउँछ। जिस्क्याउनचाहिँ नजिस्क्याउनु। हरियो चुरा र राता पोशाकमा सजिएर पशुपति आउने ती नारीहरु भोका हुन्छन्। ओहो, भोक शब्द आउनेबित्तिकै मलाई त भोक लाग्यो। तँ पनि केही खान्छेस्?’

उनीहरुले क्रिस्पी पोटेटो चिप्स खाए। कफी पिए र एकएक सिगरेट सल्काए।

तीन दिनपछि कनिका पशुपतिमा थिई। मन्दिर परिसरमा भक्तजनहरु संगीत र नृत्यमा तल्लीन थिए। तमाशा हेर्दाहेर्दै भिड सँगसँगै ऊ आइपुगी गौशाला चोक। उसका आँखा चोकको दक्षिणमा फैलिन थालेको बजारमा पऱ्यो। ऊ त्यतै लागी। मेलम्चीले भर्खर बिगारेको त्यो सडक निर्माणको संकेत कतै थिएन। हिलो र जमेको पानीले बाटो हिँडनेहरुलाई निकै असुविधा थियो। त्यस्तो बाटोमा पनि दुवैतिर बजार फैलिएको थियो।

बजार जति फोहोर थियो, त्यत्ति नै थियो जीवन्त। हिन्दी गीत, दोहोरी गीत र सुगम संगीतको मिश्रण थियो वातावरणमा। छड्के आँखा जुधाउने केटाकेटी पनि निकै थिए। सर्लाही लज, महोत्तरी भोजनालय, बारा खाजा घर, सिराहा होटल एण्ड लज, कस्मिक टुरिज्म, वैष्णोदेवी टुर्स एण्ड ट्राभल्स, यहाँ सर्लाही जाने सुमोको टिकट पाइन्छ, न्यु साप्ताहिक डिलक्स– साइनबोर्डको लर्कन देखेर नै आत्तिएकी थिई कनिका।

उसले गल्लीका रेष्टुराँतिर आँखा दौडाई- माछाभात– ९० रुपैयाँ, चिकन करी राइस– १२० रुपैयाँ, यहाँ शुद्ध शाकाहारी खाना पाइन्छ– ८० रुपैयाँ।

'दि लिटिल मधेश'– कनिकाको ओठबाट अनायाश यो शब्द निस्किनु त्यति अस्वाभाविक थिएन। किनभने, बजारमा मधेशका विभिन्न गाउँबाट आएका नेपालीहरुको भिड थियो। भिड देखेर कनिका छक्क परी। उसले एक स्थानीय व्यापारी महिलासँग सोधी, 'के यी सबै मानिस पशुपतिको दर्शन गर्न आएका हुन्?'

कनिकाको प्रश्न सुनेर ती व्यापारी महिला जोडले धीत फुकाएर हाँसिन्। मानौं कि उनले धेरै लामो समयदेखि मन फुकाएर हाँस्नै पाएकी थिइनन्। निकै लामो हाँसोपछि कनिकाको प्रश्नको जवाफमा उनले भनिन्, 'केको पशुपति दर्शनका लागि आउँथे नि नानी। यी त सबै नोट कमाउन विदेश जान लागेका लाहुरे हुन्। अब भिसा लागेपछि यी कतार-दुबईतिर उड्छन्। यो टोलमा वैदेशिक रोजगारीका अफिसहरु टन्नै छन्। यहाँको बजार त्यसैले चलेको हो।'

कनिकाको नजर छेउको एउटा छाप्रोमा पऱ्यो, 'वरहथवा लज एण्ड भोजनालय।' ऊ अचम्ममा परी– त्यो दुई वटा सामान्य कोठा भएको छाप्रोमा चलेको लज कस्तो होला? भोजनालय कस्तो होला? केही बेरपछि उसले रियलाइज गरी, अहिलेसम्म उसले देखेको होटल र लजहरु सबै त उस्तै छन्। जो ठूला छन्, ती यो बजारभित्र छैनन्। ऊ आफ्नो अज्ञानतामा हाँसी र बजारका पसलहरुमा राखिएका विभिन्न खालका कपडा र ब्युटी

प्रडक्टस्हरु हेर्न थाली। बजारको एक छेउमा टाँगिएको एउटा सानो साइनबोर्डमा लेखिएको थियो- 'यौन दुर्बलता हटाउन सम्पर्क गर्नु होला। ग्यारेन्टीका साथ उपचार गरिन्छ।'

पढेर कनिकालाई खित्का छाडेर हाँस्न मन लागगेको थियो। तर, हाँसिन। हाँसोलाई मनैमा दबाइदिई।

कनिकालाई लाग्यो, ऊ त ख्यालख्यालमा नै रिपोर्टर भइसकी। ऊ गल्लीबाट बाहिरिई। छेउमा रहेको एउटा धार्मिक संघको आँगनमा हरियो चुरामा सजिएका महिलाहरु 'यो नानीको शिरैमा इन्द्रकमल फूल फुल्यो'को शैलीमा शिव–पार्वतीको भजन गाउँदै थिए।

# १६. ट्राफिकमा कनिका

रिपोर्टरका रुपमा चिनिन कनिकालाई समय अलिकति पनि लागेन।

'अब्जर्भर'को रिपोर्टर भएकोमा ऊ एकदमै खुशी थिई। सुदिप्ती सपोर्टिभ थिई। ऊभन्दा सपोर्टिभ थियो विपन।

विपनलाई साथीहरु जिस्क्याउँथे, 'कन्या राशी।'

केटी जातलाई सपोर्ट गर्ने उसको स्वभाव नै थियो। कनिकालाई विपनको यो स्वभाव थाहा थिएन। उसलाई थाहा पाउनुपर्ने आवश्यकता पनि थिएन। कनिका आफैं कुनै केटातिर आकर्षित नभएसम्म कसैले 'मछली' फसाउन सक्दैनथ्यो। चार्लीसँगको प्रेममा ऊ चुर्लुम्म डुबेकी थिई।

अब्जर्भरमा पहिलो रिपोर्ट छापिनेबित्तिकै उसले चार्लीसँग भिडियो च्याट गरेकी थिई, 'मैले काम गर्न थालें नि। अब म रिपोर्टर। सुदिप्तीको अनलाइन अब्जर्भरको सिटी रिपोर्टर।'

सुनेर चार्ली हाँसेको थियो। मनमनै भनेको थियो- कति दिन उफ्रिने हो केटी। जे भए पनि ऊ खुशी थियो।

कनिका जीवनको नयाँ मोडमा थिई। राम्रोसँग काम गरी भने राम्रो रिपोर्टर हुने मटरियल थिई ऊ। कनिका चञ्चल थिई। मूड चलेन भने केही नगर्ने ढिपीवाल। यही चञ्चल स्वभाव उसको सौन्दर्य थियो।

यस पटकका लागि कनिकाले रिपोर्टिङको विषय छानेकी थिई- ट्राफिक।

कान्तिपुर शहरको जस्तो ट्राफिक अरु कुन शहरमा होला? उसलाई थाहा थिएन। अंकलहरुले ब्यांकक र कोलकाताका ट्राफिकको कुरा गरेको उसले सुनेकी थिई। आफैं कतै केही देखेकी थिइन। कान्तिपुरमा पनि अक्सर ऊ आफनै स्कुटी र साथीभाइहरुको बाइकमा हिँड्थी। केटीहरुलाई स्कुटी चलाउन अलिकति गाह्रो भए पनि केटाहरु सजिलैसँग चलाउँथे बाइक।

उसले गुगल गरी। त्यसमा भनिएको थियो- ट्राफिक लाइटले भेहिकल मुभमेन्ट कन्ट्रोल गर्ने हो भने ट्राफिक जाम कुनै पनि ठूलो शहरका लागि साह्रै ठूलो समस्या रहँदैन। कनिकाले सोची, ट्राफिक लाइट त कान्तिपुरका सडकमा पनि छन्। शहर त्यति ठूलो पनि छैन। शहरमा ती लाइटले किन काम गर्दैनन्? किन धुलो, धुवाँ, गर्मी, जाडो, घाम र पानीका हरेक मौसममा ट्राफिक पोस्टमा उभिएर पुलिसहरु दुःख पाइरहेका छन्?

कनिकाले सोची, चौबीस घण्टामा आठ घण्टा बिजुली बल्ने देशमा कसरी चलोस त ट्राफिक लाइट? कुरा ठिकै थियो। कनिकाको मनले यो तर्क मानेन। अल्टरनेटिभ पावरको युगमा जाबो ट्राफिक लाइट त घाम पावरले पनि चल्छ। घाम पावरले यत्रो शहर झिलिमिली भएको छ भने ट्राफिक लाइट नबल्ने त हुँदै होइन।

कनिकाको साथी अनिमेषको अंकल सौगात रोडवेज एक्सपर्ट थिए। कान्तिपुर शहरका सडकहरुको ज्ञाता। कनिकाले सौगात अंकललाई फोन गरी र आफ्नो समस्या सुनाई। उनले उसलाई घरैमा बोलाए। स्कुटी चढेर ऊ सौगात अंकलको घरमा पुगी। उनले बताए, 'कान्तिपुरका सडकमा गुड्ने सवारी साधनलाई सुविधा होस् भनेर धेरैले सहयोग गरे पनि शहरले मोडर्न टेक्नोलोजीको मजा लिन पाएको छैन। केही वर्षअघि मात्र जापान सरकारले कान्तिपुर शहरमा ट्राफिक लाइट सिस्टम मोर्डनाइज गरिदिएको थियो। हाम्रो सरकारले त्यसको मेन्टेनेन्स नै गर्न सकेन। सोलार सिस्टमको ब्याकअप भएन। मसीनहरु मर्मत हुनै नसक्ने गरी बिग्रिए।'

कनिका छिटो कुरा बुझ्छे। उसले बुझी। सोची, 'देयर मस्ट वी अदर रिजन्स टु...। ट्राफिक लाइट नभएपछि देशका सडकमा साइरन बजाएर आफ्नो आगमनको सूचना दिँदै हिड्ने नवशासक र उनका सहयोगीहरुको मोटर बिनाबाधा आवत–जावत गर्न पाउने भयो। त्यसपछि पुलिसले ट्राफिक म्यानेजमेन्टका नाममा आफ्नो अधिकारको मनलाग्दी प्रयोग गर्न पाउने भयो। सडकको राजा हो ट्राफिक पुलिस, जसले जुनसुकै बेला कसैले गल्ती गरे

पनि र नगरे पनि जरिवानाको टिकट काटेर आफनो कमिशन ग्यारेन्टीगर्न सक्दछ। घामले तातेको आफ्नो रिस कसैमाथि पोख्न सक्छ अकारण।

स्कुटी चढेर ऊ बढी ट्राफिक जाम हुने एरिया घुम्न निस्किई। चाबेलबाट शुरु भएको उसको यात्रा गौशाला, पुरानो बानेश्वर, ज्ञानेश्वर चोक, पुतलीसडक हुँदै नयाँसडकमा पुगेर रोकियो।

उसले अलि अपायकको ठाउँमा आफनो स्कुटी रोकी र कफी हाउसतिर छिरी। लगभग एक घण्टापछि कफी हाउसबाट निस्किएर अघि स्कुटी पार्क गरेको ठाउँमा आउँदा स्कुटी नै थिएन।

उसले छेउको चानचुन पसलेसँग सोधी। उसले जवाफ दियो, ‘ट्राफिकले ट्रकमा हालेर लग्यो तपाईंको बाइक मेमसाब। हिजोदेखि नयाँसडकमा नयाँ नियम लागू भएको छ। अब नयाँसडकमा सवारी गुडाउन मात्रै पाइन्छ, निमेषभर पनि अड्याउन पाइँदैन। पार्किङ गर्ने हो भने कि विशाल बजार जानुपर्छ कि रन्जना छिर्नुपर्छ।’

कनिका ट्वाल्ल परी।

# १७. हाइवेमा कनिका

कनिकालाई आफनो स्कूटी फेलापार्न त्यति गाह्रो भएन। बग्गीखानाको रुपमा प्रख्यात भएको ट्राफिक मुख्यालयमा त्यो सुरक्षित थियो। बग्गीखाना पुगेर उसले आफनो स्कूटीको पहिचान गरी। प्रहरीले निषेधित क्षेत्रमा पार्किंग गरेको अपराधमा एक हजार रुपैयाँ जरिवाना गर्‍यो। कनिकाको विचारमा यो सोह्रै आना अन्याय थियो। उसलाई रिस नउठेको होइन। तर, त्यहाँ ऊ जति रिसाएपनि केही हुनेवाला थिएन। आफनो स्कूटी सम्हालेर ऊ लागि सुदिप्तीलाई भेटन अफिसतिर।

कनिकाले आफनो स्कूटीको कथा सुनाउँदा सुदिप्ती हाँसी रहेकी थिइ। कनिकाको जीवनमा यो पहिलो चोट थियो। यस्ता धैरै चोट नपाएसम्म मानिस पर्फेक्ट हुनै सक्दैन। सुदिप्ती आक्रोशले भरिएकी कनिकालाई अर्को एडभेन्चर स्टोरीको खोजमा पठाउन चाहन्थी।

सुदिप्तीले भनी, ‘हेर कनि, यतिबेला तँ तातेकी छेस। हिंड, पसलतिर जाउँ। रिल्याक्स मूडमा कुरा गरौंला। नयाँ प्रोजेक्टका बारेमा। एक्चुअल्ली आइ वाण्ट यू टु डु समथिंग न्यू।’

नयाँ प्रोजेक्टको कुरा सुनेर कनिका गम्किइ। ऊ त यही खोजी राखेकी थिइ। उनीहरु अफिसबाट उठे र पसलतिर लागे। सुदिप्तीले आफनो लागि फ्र्यापचिनो अर्डर गरी। कोल्ड आइटममा कनिकाको कुनै रुचि थिएन। उसले आफना लागि लंग व्ल्याक अर्डर गरी। त्यसपछि व्यागबाट सिगरेट निकालेर सल्काइ।

सुदिप्तीले भनी, 'तँ पनि म जस्तै स्मोकर भै सकिस्।'

कनिकाले सिगरेटको प्याकेट सुदिप्तीतिर तेर्स्याइ र हाँस्न थाली।

सिगरेटको धुवाँ तान्दै सुदिप्तीले भनी, 'कनि, उड यू लाइक टू डू सम एडभेन्चरस रिपोर्टिंग अन आवर हाइ वे सिष्टम?'

कनिले उत्साहित हुँदै जवाफ दिइ, 'व्हाइ नट । द्याट्स व्हाट आइ एम लुकिङ फर।'

सुदिप्तीले भनी, 'त्यसो भए तँ मेरो कार लिएर पोखरा र चितवनको राउण्ड लगाएर आइज।'

कार चढेर हाइवे रिपोर्टिंगमा जाने कुरामा कनिका सहमत भइन। ऊ एक्लै सार्वजनिक बस चढेर जान चाहन्थी। कारमा आनन्ददायक सफर गरेर मानिसका दुःख र पीडा बुझ्न सकिँदैन भन्नेमा सहमत थिइ कनिका। उसले सुदिप्तीलाई बताइ, 'मलाई कार चाहिन्न। म सार्वजनिक बसमा जान्छु। आइ वाण्ट टू फिल दि पिपुल। देयर कण्डिसन एण्ड अदर स्मलर थिंग्स। आइ क्यान टेक केयर अफ माइसेल्फ।'

कनिकाको कुरा सुनेर सुदिप्ती झन खुशी भइ। एकातिर उसको गाडी जोगियो। अर्कोतिर, रिपोर्ट पनि रियल आउने भो। कनिका भोलिपल्ट जाने भै। पहिले चितवन र त्यसपछि पोखरा। उनीहरु अफिस पुगे। सुदिप्तीले पचास हजार रुपैयाँ मेनटेनेन्स अलाउन्स दिइ कनिकालाई।

कनिका साँझ घर पुगी। भ्रमणको अवसर पाएर उ निकै गदगद भएकी थिइ। उसले मम्मी–पापालाई आफनो रिपोर्टिंग ट्रिपबारे बताइ। शुरुमा त दुवैले कनिकालाई निरुत्साहित गरे। कनिकाले घुर्क्याउन थालेपछि उनीहरुको जोड चलेन। त्यसपछि उनीहरुको कन्सर्न कनिकाको सुरक्षामा सीमित भयो। मम्मीले ठटेउलो पारामा भनिन्, 'हजुरमुवाँले थाह पाइस्यो भने के होला ? यो केटी कुरै बुझ्दिन।'

कनिकाले मम्मीको अनुहारतिर हेरी र मुसुक्क हाँसी। त्यसपछि ऊ कोठामा गइ। हतार हतार मेसेन्जर अन गरी। यो चार्ली अनलाइन हुने बेला थियो। कनिकाले क्लिक गरी। स्क्रिनमा चार्ली मुस्कुराइरहेको थियो। कनिकाले भनी, 'तिमी आज धेरै खुशी हुनेछौ मसँग।'

'कसरी ?' चार्लीले जिस्क्याउने मूडमा सोध्यो । कनिकाले एकै सासमा सुदिप्तीसंगको डील बताइ। पचास हजार अलाउन्स पाएको पनि बताइ।
त्यसपछि भनी, 'तिमी अर्को पटक छुट्टीमा आउँदासम्म मैले पनि अलिकति पैसा कमाइ सकेको हुनेछु।'

चार्ली खुशी भयो। उसलाई लागेको थियो, अब कनिकाको जीवन र दृष्टिकोणमा निकै ठूलो परिवर्तन देखिनेछ।

उनीहरु च्याटबाट बाहिरिए। मम्मी–पापासँगै डिनर खान कनिका डाइनिंग टेवलतिर लागी। उसलाई पापाले बसपार्क छाडिदिने भए। मम्मीले ड्राइफ्रुटको प्याकेट बनाइ दिइन्।

त्यसपछि ऊ सुत्न गई। धेरै बेरसम्म उसलाई निद्रा लागेन। ऊ आफनो भ्रमणको कल्पनामा चुर्लुम्म डुबी। कतिबेला निंदाइ पत्तो भएन। भोलिपल्ट बिहान ऊ चाँडै उठी र फ्रेस भइ। उसको पापा ब्रेकफाष्टका लागि उसलाई पर्खेर बसेका थिए। ब्रेकफाष्टपछि कनिकाले आफनो रुक्स्याक बोकी र पापासँगै लागी बसपार्कतिर । छुट्टिने बेलामा पापाले उसलाई एटीएम कार्ड र त्यसको कोड दिदै भने, 'राम्रोसँग जानू। हडबडाउने होइन।'
कनिकाले हाइवे रिपोर्टिंग मुभमेण्टको पहिलो खुडकिलो टेकी।

# १८. हाइवेबाट ब्रेकिङ न्युज

बसपार्कबाट बिहान सात बजे हिंडेको बस साढे नौ बजेसम्म उपत्यकाभित्रै अडकिएको थियो। बस त्रिभुवन पार्क र नागढुंगाका बीच कतै जाममा थियो। बसको झ्याल झ्यालमा यात्रुहरुको सुविधाका लागि वाइफाई जडान भएको जानकारी टाँसिएपनि मोवाइल सेटमा वाइफाईको संकेत थिएन। बस बाहिर स्थानीय मानिसहरु गाडी जामको फाइदा उठाएर पानी र कुरकुरेको व्यापारमा लागेका थिए। भदौरे घामको तातोले सबै यात्रुको तालु पोलिरहेको थियो। विभिन्न थरि मानिसका विभिन्न थरी गन्धले घेरिएकी कनिका बसको

सीटमा कुचुरक्क परेर बसेकी थिई। उसलाई बसको सीटदेखि सुविधासम्म केही मन परेको थिएन। तर, पव्लिक बसमा यात्रागर्ने चाहना उसकै थियो।

जीवन सँधै दरबार मार्गको शपिङ विन्डोज त हुँदै होइन। ऊ सोच्दै थिइ, बसमा यात्रा गरिरहेका कतिपय मानिसका लागि दरवार मार्ग त इल्युजनमात्रै हो। असंख्य जीवनको ै वास्तविकता त यही बस हो। कनिका आफनो मनलाई सम्झाउँदै थिइ, उता बसमा घुसेको लामखुट्टेले उसको गोडा र पिँडौलामा कुटुक्क टोक्दै थियो। बेला बेलामा उ रन्थिनिन्थी। के भएको हो? किन जाम भएको हो? उसलाई खुलदुली लागि रहेको थियो । तर, को सित सोध्ने? ऊ रनभुल्लमा परेकी थिइ।

उसले देखी, एकजना मानिस जाम भएतिरबाट आउँदैछ। उसले झ्यालबाट आफनो मुण्टो वाहिर लगेर त्यो मानिसको ध्यानाकर्षण गराइ, 'अंकल, किन भएको रहेछ यो जाम? केही थाहा पाउनु भो?'

उसले जवाफ दियो, 'एउटा लोड गाडी बिग्रेर सडकको वीचमा अलपत्र परेको रहेछ। यो बाटोमा जाम हुने कारण त्यही त हो नि नानी।'

कनिकाले विदेशी टेलिभिजन च्यानलमा धेरैपल्ट हाइवेमा अचानक बिग्रिएका गाडीलाई पुलिसले टो गरेर लगेको दृश्य देखेकी थिइ। आफनै देशको हाइवेमा के हुन्छ? उसलाई अनुभव थिएन। यो उसको पहिलो हाइवे यात्रा थियो।

एक्सेल भाँचिएर अलपत्र परेको त्यो लोड गाडीलाई सडकबाट पन्छाउन पुलिसहरु सक्रिय थिए। एउटा डोजरले लोड गाडीलाई सडक किनारातिर धक्याउँदै थियो। झण्डै ै ११ बजेतिर जाम खुल्यो। कनिका ढुक्क भइ। बस विस्तारै अघि वढ्यो र स्पीड लिन लाग्यो।

नौबिसेबाट केही अगाडि बढेपछि बस रोकियो। कण्डक्टरले यात्रुहरुलाई खाना खाने सूचना दियो। कनिका पनि बसबाट ओर्लिएर एउटा होटेल अगाडि ठिंग उभिइ। होटेल आधी फोहोर थियो र आधी सफा। पोहोर साल सरकार हाइवे होटेल चेकिंगमा निस्किंदा यो होटलले पाएको ग्रीन स्टीकरलाइ झिंगाले विरुप बनाइसकेका थिए। कनिका होटलको दृश्यावलोकन गर्दैथिइ। बसका केही खाइलाग्दा युवकहरु कनिकालाई हेर्दै थिए। कनिकाले आफनो मोवाइल क्यामराले होटेलका विभिन्न परिकार र दृश्यहरुको फोटो खिची। केही शव्दहरु सम्झिइ। उसलाई त्यो होटेलमा केही खान मन लागेन। ऊ आफनो ममीले रुक्स्याकमा राखी दिएको ड्राइ फ्रुटमा रमाउन थाली।

यात्रीहरुले खाना खाएपछि बस हिंड्यो । गल्छी, बैरेनीहुँदै मध्यम गतिमा हिंडिरहेको कनिकाको बस आदमघाट पुगेपछि अचानक ध्याच्च रोकियो। यसरी बस रोकिंदा धेरै यात्रीको टाउको आफू अगाडिको सीटमा ठोकियो। के भयो के भयो भनेर आत्तिएका यात्रुहरुले थाहा पाए, एक मिनट अघिमात्र बसलाई तिव्र गतिमा ओभरटेक गर्दै गएको माइक्रो बस उताबाट आइरहेको लोड गाडीसंँग ठोकिएर चकनाचूर भएको थियो। माइक्रोमा चढेका एकजना यात्रु पनि सावूत थिएनन्। तीनजना केटाकेटीको टाउको फुटेको थियो। सबै गम्भीर हिसाबले घाइते थिए।

कनिका दृश्य देखेर नराम्रोसंग आत्तिइ। उसका आँखाबाट बररर झरे आँसुका थोपाहरु। तर, उसले होस गुमाइन। भटाभट तस्वीर खिच्न थाली। झण्डै एक घण्टापछि पुलिस र एम्वुलेन्स आयो। त्यसबेलासम्म स्थानीय मानिस र कनिका चढेको बसका यात्रुले घाइतेहरुलाई गाडीको चेपबाट निकालेर बाहिर राखेका थिए। ती मध्ये तीनजनाको अवस्था क्रिटिकल थियो। ड्राइभरको टाउको फुटेको थियो र उसको आँखा बाहिर निस्किएको थियो।

दुर्घटनापछि बस हिडने टुंगो भएन। कनिकाले वरपर हेरी र देखि एउटा कफी शप - फिफ्टी सिक्स एक्सप्रेसो एन्ड बार। आफनो झोला बोकेर ऊ त्यतैतिर लागि। कफी शपको वातावरण सामान्य भएर पनि असामान्य थियो। कनिका त्यो वातावरणमा रमाउने मूडमा थिइन। ऊ ब्रेकिङ न्यूज लेख्न चाहन्थी। उसले सुदिप्तीलाई फोन गरी र दुर्घटनाको विवरण सुनाइ। त्यसपछि आफना आँशुले अक्षरहरुलाई भिजाएर बडो संवेदनशील समाचार लेखी। तथ्यहरु दोहोऱ्याएर चेक गरी। कफी शपमा वाइफाइ थियो। उसले समाचार र तस्वीरहरु मेल गरी। त्यसपछि सिगरेट सल्काइ, एक सर्को तानी र कफीको लामो सीप लिइ।

बिहान सात बजे हिंडेकी कनिका चितवन पुग्दा रातिको नौ बजिसकेको थियो। ऊ भरतपुर छेउको एउटा होटलमा बसी र ड्याडी ममीलाई आजको घटना सुनाउँदै भनी, 'ड्याड, इट वाज हरिफिक....देयर वाज नो ट्राफिक रुल्स एण्ड रोड डिसिप्लिन।'

# १९. मुग्लिनको बाटोमा कनिका

बिहान छिट्टै निद्रा खुल्यो कनिकाको। राति छिर्दा कसो-कसो डिंगी लागेको थियो यो होटल। प्यासेजमा व्याड स्मेल। कताकताबाट आएको वासरुमको तीखो गन्ध। ऊ थाकेकी थिइ। पानी पिएर सुती हाली। व्युँझेपछि ऊ अलिकति राम्रो र गतिलो होटलमा सर्ने सोच्न

थाली। ओछ्यानबाट उठेर ऊ झ्यालमा गइ। होटल बाहिरको वातावरण रमाइलो थियो। उसले कोठा नियालेर हेरी। कुनै खराबी थिएन। बेड, बेड कभर, ब्ल्यांकेट, टावेल, बाथरुम सबै राम्रा थिए। अझ बाथरुम त उसको घरको आफनो बाथरुम जस्तै थियो। उसले होटेल सर्ने कुरा ड्रप गरी। त्यसपछि टेलिफोन उठाइ। रुम सर्भिसमा फोन गरी र भनी, 'क्यान आइ ह्याभ सम कफी? अ लार्ज लङ ब्ल्याक?'

रुम सर्भिसले लङ ब्ल्याकको त नामै सुनेको थिएन। उसले भन्यो, 'नो म्याम । वी डोन्ट हायभ योर च्वाइस अफ कफी। वी ह्याभ वन्ली अमेरिकानो, डोप्पियो, क्यापचिनो, लात्ते...'

अमेरिकानोको नाम सुनेपछि चहकिंदै कनिकाले जवाफ दिइ, 'ओके। गेट मी वन लार्ज अमेरिकानो डबल शट।'

केही बेरपछि कफी आइपुग्यो। कनिका त्यसको सुवासमा नै रत्तिइ। आदमघाटको क्याफे ५६ मा पिएपछि उसको यो क्याफिनसँगको पहिलो टच थियो। उसले दुइ सिप कफी पिइ र सिगरेट सल्काइ। सिगरेटको पहिलो सर्को हलुका सर्कियो। ऊ खोक्न थाली। खोक्दा खोक्दा कफी घुट्क्याइ।

खोकी बन्द भयो। ऊ सोफामा हात–गोडा फालेर चार्लीलाई सम्झिन थाली। चार्ली भएको भए उसको यो ट्रिप निकै रंगीन हुन्थ्यो होला। सोच्दासोच्दै उ भावुक भइ। त्यसपछि चार्लीलाई डाइरेक्ट भिडियो कल गरी। मेसेन्जरको कनेक्सन पर्खेर बस्न उसलाई झ्याउ लाग्यो।

चार्लीले फोन उठायो, 'हे, कनी, के भो ? किन भिडियो कल गरेकी ? मेसेन्जर कल गरेको भए भै हाल्थ्यो नि। दिस इज ब्लडी एक्स्पेन्सिभ।'
कनिकाले हाँस्दै उसलाई जिस्क्याइ, 'म जत्तिको यंग र सेलिब्रिटी जर्नलिष्टका लागि महंगो र सस्तो त बालै भएन नि। हेर यसको वर्किंग क्लास मेन्टलिटी। यू नो व्हेर आइ एम नाउ ? इन चितवन एण्ड अलोन। रिपोर्टिंग हाइ वे ट्रेजेडिज। तिमीलाई धेरै मिस गरेपछि भिडियो कल गरेको।'

त्यसपछि उसले थाह नपाए जस्तोगरी फोन डिस्कनेक्ट गरी। वास्तवमा, कनिकालाई चार्लीको 'दिस इज ब्लडी एक्स्पेन्सिभ' वाक्यले हिट गरेको थियो। प्रेममा पनि कसैले पैसाको मुख हेर्छ। शीट।

फोनको मेसेन्जरमा चार्ली घण्टी बजाइरहेको थियो। कनिकाले त्यो कल रिसिभ गरिन। ऊ विस्तारै अमेरिकानोको स्वाद र सिगरेटको धूवाँमा रमाउन थाली।

त्यसपछि बाथरुम गइ। आनन्द मान्दै बाथटबमा डुबी। मस्त नुहाएपछि जीन्सको मरुन कलरको शर्ट र टप लगाइ। कपाल छाडा नै रहन दिइ। हल्का मेकअप गरी र ब्रेकफाष्टका लागि लवीको छेउमा रहेको रेष्टुराँतिर लागी। होटल नयाँ थियो र निकै राम्रो। हिजो राति ब्याकडोरबाट पसेकोले मात्र उसलाई नराम्रो रहेछ भन्ने परेको थियो। तर, जे भएपनि, प्यासेजमा ब्याड स्मेल त हुनु हुँदैन थियो नि।

कनिका भोकाएकी थिइ । हिजोको दिन मम्सले रुक्स्याकमा राखी दिएको ड्राइफ्रुट्स र पानीमा बितेको थियो। अहिले भने उसले आफनो च्वाइसको मसरुम अमलेट, ससेज र ब्रेड, वनाना, एप्पल र योगर्ट–स्कूप फेला पारेकी थिइ। ऊ निकै मनोयोगले ब्रेकफाष्ट खाँदै थिइ। उसको पछाडिको टेबलमा दुईजना टुर गाइड पनि ब्रेकफाष्ट खाँदै मुगलिङ सडकमा आफूले भोगेको अनुभवको पोको फुकाउँदै थिए। उनीहरुको कुरा सुन्दा जो कसैले पनि जिब्रो काढ्न सक्दथ्यो। उनीहरु चारजना पर्यटकलाई लिएर बिहान छ बजे काठमाडौबाट हिंडेका थिए जीपमा। भरतपुर आइपुग्दा साढे नौ बज्यो। खतरनाक बाटोमा जाम र थोत्रिएको सडकमा मोटरको खतरनाक हिंडाइले ती टुरिष्ट हत्तु भएका थिए। साढे चौध घण्टाको थकाइले पस्त भएर सुतेका ती पर्यटक नौ बजेसम्म उठेका थिएनन्।

‘यस्तै तालले हुन्छ पर्यटन प्रवर्द्धन। बाटोको ताल यस्तो छ। यस्तो अनावश्यक दुःख खान किन आउँछन् कुइरेहरु नेपालमा ? यही ताल हो भने पर्यटन चाहीं गयो भाइ’ एउटाले कमेन्ट गर्‍यो। अर्कोले सही थाप्यो। त्यसपछि उनीहरु उठे।

कनिका के सम्झेर हो, ब्रेकफाष्ट खाँदाखाँदै उठी । उसले ‘एक्स्क्यूज मी’ भन्दै उनीहरुसंग सोधी, ‘यो अहिले तपाईंहरु जे कुरा गरिरहनु भएको थियो नि सडकबाट आउन साढे चौध घण्टा लागेको कुरा, के त्यो सत्य हो ?’

उनीहरु मध्ये एउटा मानिसले जवाफ दियो, ‘म आफैं ती टुरिष्ट लिएर आएको हूँ । मैले किन झूठो बोलुँला र म्याम ।’

उनीहरुको कुरा सुनेर कनिकालाई सरकारसँग रीस उठ्यो । त्यो सडक हेर्ने हाकिमलाई फोन गरेर आफूले जानेजति गाली ओइर्‍याउन मन लाग्यो । रीस बढी जाग्नु भन्दा अघि उसले ब्रेकफाष्ट खाइसकी। त्यसपछि एक कप कफी रुममा ल्याइ दिन रिक्वेष्ट गरी र कोठातिर उक्लिइ। बस्न त उसलाई रेष्टुराँ नै रमाइलो लागेको थियो।

तर, त्यो नो स्मोकिंग जोन थियो।

# २०. ह्विस्किने मूडमा कनिका

सुदिप्तीको नाममा मुग्लिंग–नारायणगढ सडकको 'आँखोंदेखा हाल' डिस्प्याच गरेर कनिका कान्तिपुर फर्किने तयारीमा लागी। त्यसैबेला कल आयो सुदिप्तीको। 'कहिले फर्किन्छेस्?' सुदिप्तीले सोधी र भनी 'तेरो स्टोरी राम्रो छ। रिड काउण्ट वन हण्ड्रेण्ड थाउज्यान्ड पुग्यो। पन्च अझै पुगेन। पन्च पन्च।'

गदगद भै कनिका। डिजिटल जर्नलिज्ममा रीड काउण्टको मतलव राम्ररी बुझेकी थिइ उसले। सुदिप्तीले दोहोर्याएर सोधी, 'कहिले फर्किन्छेस ? कि त्यतै भेटिस नयाँ व्वाइफ्रेण्ड ?'

कनिकाले भनी, 'आजै फर्किन्छु। दुई बजेको बसको टिकट ट्राइ गर्दैछु।'

सुदिप्तीले भनी, 'साउण्ड गुड। आइज आइज। चितवनको गैंडा हेरिस् ?'

कनिकाले सामान्य जवाफ दिइ, 'कता गैंडा हेर्नु ? बसको टिकट खोज्दैछु।'

फोन डिस्कनेक्ट भयो। ऊ रिसेप्सनमा पुगी र कान्तिपुर फर्किने बसको टिकट मिलाइ दिन भनी।

काउण्टरमा बस्ने केटाले भन्यो, 'भइहाल्छ नि म्याम। अहिले नै जाने हो ?'

कनिकाको जवाफ नआउँदै उसले टिकट वुक गर्‍यो र भन्यो, 'हजुरको काम भयो म्याम, बस अहिले दुई बजे बसपार्कबाट हिंडछ। वाईफाईको व्यवस्था छ। डिलक्स लक्जरी एयर कण्डिसन कोच हो। ज्वारभाटा एक्सप्रेस। आठ बजे कान्तिपुर उतार्छ म्याम। बस्दै गर्नुस। म टिकट लिन पठाइ दिन्छु।'

कनिका दुई बज्नुभन्दा केही मिनटमात्र अघि बसस्टप पुगी। बस स्टार्ट भै सकेको थियो। प्यासेन्जरहरु धकेला–धकेल गरेर बसमा चढदै थिए। मानौं कि बस उनीहरुलाई नबोकी दौडिइ हाल्छ। कनिका सबभन्दा पछाडि वसमा उक्लिइ र आफनो सीट खोज्न थाली। उसको टिकटमा लेखिएको सीटमा एकजना फेसनेवल महिला आफनो 'ग्रोन अप' बच्चा सहित बसेकी थिइन। उनको बच्चाले आधा सीट कब्जा गरेको थियो र ऊ क्याण्डीक्रस खेल्दै थियो। त्यही बेला वसका कण्डक्टर आइपुग्यो। कनिकाले आफनो सीट सोधी।

कण्डक्टरले ती महिला बसेको सिटतिर देखाउँदै जवाफ दियो, ‘यो दुईजनाको सीट हो, मिलेर बस्नुहोस्।’

कनिका त्यो सीटमा अटाउने सम्भावना थिएन। उसले कण्डक्टरसंग भनी, ‘कहाँ बस्ने ? दुईजनाको सीटमा तीनजना अट्छ र ?’

कण्डक्टरले रुखो जवाफ दियो, ‘म्याडम, यो पव्लिक बस हो। प्राइभेट कार होइन। चार वर्ण छत्तीस जातका सबै नेपाली मिलिजुली यात्रा गर्ने हो।’

त्यसपछि उसले कनिकातिर एउटा स्टुल तेर्स्याइ दियो र भन्यो, ‘ल अहिले यसमा बस्दै गर्नोस्। बस हिंडेपछि सीट मिलाइ दिउँला।’

बस समयमा नै हिंड्यो। रामनगरसम्म निकै घुईंकियो। जुगेडी बजारसम्म स्लो भयो। त्यसपछि दासढुंगासम्म घिस्रियो र गुडन छोड्यो। कसैले सोधेन के भो। सबैलाई थाह थियो सडक जाम भो। जाम भएको सडक कतिबेला खुल्छ भन्न सक्ने अवस्थामा कोही थिएन। सडकमा गाडीको ताँती लागिसकेको थियो।

कनिकाले थाह पाइ सकेकी थिइ, उसले आज पनि दुःख पाउने भै। गर्मीले बस तात्न थालेको थियो। मानिसको शरीरको वायु, डिजलको गन्ध र शरीरमा सुगन्ध फैलाउन लगाइने डियोडरेन्टहरु पसिनामा मिसिएपछि आउने दुर्गन्धले सफोकेशन भएको थियो बसमा। कनिका त्यो सफोकेशनबाट बच्न आफनो रुक्स्याक सहित बाहिर बसबाट बाहिर निस्किइ। ऊ नजिकको कोल्ड स्टोरतिर लागी। उसलाई हेरिरहेको एउटा केटोले उसले सुन्ने गरी नै रिमार्क ठोकी हाल्यो, ‘आह च्वाँक !’

कनिका केही बोलिन। कोल्ड स्टोरमा लागेको भीड छिचल्दै उ काउण्टरनिर पुगी। पसलेले सोध्यो, ‘के दिउँ हजुरलाई ?’ कनिकाले चीसो कोक माँगी। पसलेले आफनो फ्रिजमा भएका भर्खर चिसिन लागेका वोत्तलहरुमध्ये एउटा अलि बढी चिसो कोक छान्यो र कनिकालाई दिंदै भन्यो, ‘यो भन्दा चीसो त छैन मैसाव। यता कहिल्यै राम्रोसित लाइन नै आउँदैन। एक घण्टा आउँछ सात घण्टा जान्छ।’

कनिकाले एक घण्टा र सात घण्टाको हिसाब बुझिन। उसलाई बुझ्नु पनि थिएन। उसले आफनो व्यागबाट सिगरेट निकाली र तान्न थाली।

महिलाले सिगरेट तान्नु यतातिरका लागि कुनै अनौठो थिएन। तर, कनिकाले सिगरेट तान्नु अनौठो र अस्वाभाविक घटना बन्यो। छेउछाउका मानिस उसलाई कर्के आँखाले हेर्न थाले। मानौं कि उनीहरुको वरपर कुनै अनहोनी कुरा भएको छ। संशय पनि उव्जियो होला मानिसको मनमा। एक्ली केटी कोकको वोत्तल हातमा लिएर सिगरेट तान्दैछ। विदेशी भएको भए अर्कै कुरा हुन्थ्यो। यो त नेपाली नै हो। अघि नेपाली नै बोल्दै थिइ। अर्काको कुरा काट्नु र कसैले आफूलाई नजच्ने केही काम गऱ्यो भने कमेन्ट ठोक्नु त नेपालीको आदत नै हो। अझ, महिलाले त केही गर्नै हुँदैन। अनौठो भै हाल्छ। कनिकाले आफू वरिपरि घुमेका भावहरु नबुझेकी थिइन। कसैले केही रियाक्ट गरेको भए उ पडकिन्थी होला। तै, त्यहाँ कसैले केही बोल्ने साहस गरेन।

तीन त बजिसकेको थियो। चार, पाँच र छ बजेसम्म पनि जाम खुल्ने लक्षण नदेखेपछि कनिकाले नारायणघाट फर्किने निधो गरी। तर, फर्किने कसरी? जाम छिचल्दै एक दुईवटा मोटरसाइकिल आइ रहेका थिए। उसले एउटा मोटरसाइकिललाई रोक्ने इशारा गरी। मोटर साइकिल रोकिएपछि उसले आफनो समस्या बताइ। मोटरसाइकिलवाला उसको कथा सुनेर द्रवित भएको थिएन। एउटी मस्तकी केटीलाई आफनो मोटर साइकिलमा राखेर गुडाउन पाएकोमा खुशी थियो।

केही बेरपछि कनिका नारायणघाट बजारमा थिइ। उसले मोटरसाइकिलवालालाई धन्यवाद दिइ र होटलतिर जान इ–रिक्सा समाती।

नारायणघाटको जलवायु उसलाई फापेको थियो। होटल पुगेर उ व्हिस्किने मूडमा थिइ।

# २१. कनिकाको खातामा आँखोदेखी समाचार

कनिका अन्ततः मुग्लिनको बाटो बिर्सेर सिस्नेरीको बाटो फर्किने भई कान्तिपुर। योभन्दा उत्तम विकल्प अर्को थिएन। हरेक दिन रामनगर वा दासढुंगामा जाम खुल्ने प्रतीक्षामा ढुक्नुको अर्थ पनि थिएन। सिस्नेरीको बाटो थियो उसको नयाँ भेन्चर। कहिल्यै केही थाहा नपाएको र नामै नसुनेको एउटा बेग्लै नक्सा हुँदै एक्लै यात्रा गर्दै थिई ऊ कान्तिपुरतिर।

चितवनको होटलवालाले उसलाई भनेको थियो, 'हेटौंडासम्म जानुभयो भने जीप–सवारीहरु थुप्रै पाइन्छन्। त्यो तपाईंको लागि अलि झन्झटिलो हुन्छ। हाम्रो होटलको मोटर गेस्ट लिन कान्तिपुर जाँदैछ। त्यसमा जानुभयो भने सुविधाजनक हुन्छ।'

होटेलको कारमा भ्याट सहित ३,३९० रुपैयाँ लाग्ने भयो। कनिका तयार भई। उसलाई पनि कान्तिपुरको न्यास्रो लाग्दै थियो। चार्लीसँगको सहज च्याट, कफी, साथीभाइसँगको गफ र बाबा–मामु। रिपोर्टिङको जोश नभएको भए तीन दिनसम्म उसका लागि यो चितवनमा एक्लै बस्नु सम्भव नै थिएन। उसलाई जंगल सफारी जाने मन थियो। त्यो पनि गइन। उसले प्रेसर फिल गरेकी थिई रिपोर्टिङको।

यो तीन दिनमा उसले धेरै कुरा बुझेकी थिई। कसरी चल्छ राजमार्गको सिस्टम? कसरी बिग्रिन्छन् राजमार्गहरु? कसरी बिग्रिन्छ वा बिगारिन्छ प्रक्रियाहरु? राजनीतिक नेता, ठेकेदार र व्यवसायीहरुले कसरी गर्दछन् योजनाको म्यानिपुलेसन; मोटामोटी सबै बुझिसकेकी थिई कनिकाले तीन दिनमा।

उनीहरु अपराह्न दुई बजे निस्किए चितवनबाट। ड्राइभर निकै परिपक्व र भलादमी देखिन्थ्यो। गाडीमा एसी चलेको थियो। त्यसैले आफ्नो मनलाई जबर्जस्ती रोकेर चुरोटको तलतल मारेकी थिई कनिकाले। अति भएपछि उसले ड्राइभरलाई मोटर रोक्न भनी र बाहिर ओर्लिई। गाडीले हेटौंडा बजार छिचोलिसकेको थियो। मेम साहेबले किन गाडी रोकिन्? ड्राइभरले कुरा बुझेको थिएन, तर कनिकाले चुरोट सल्काएको देखेपछि उसको छेउमा गएर भन्यो, 'गाडीमा नै पिउनु भए हुन्छ।'

गाडी केही बेरमा नै भैंसे पुग्यो। त्यसपछि ड्राइभरले सोध्यो, 'मेम साहब, छोटो बाटो लागौं होला कि? यो बाइरोडको बाटो लामो पनि छ र घुमाउरो पनि। यो अर्को दक्षिणकालीको बाटो अलि कमसल भए पनि सजिलो र छोटो छ। यतैबाट जाऔं होला।'

कनिकाले 'हुन्छ' भनी र प्राकृतिक दृश्यहरुमा रमाउन थाली। उसको मनमा विचार आयो- ओहो, कान्तिपुरबाट यति नजिक छौं हामी र पनि कहिल्यै यता आउँदैनौं। उसलाई आफनो शहर एउटा गहिरो इनार जस्तो लाग्यो। इनारमा बस्ने मानिसहरु सबै भ्यागुता जस्ता। ऊ दिमागमा साथीभाइ बटुलेर हाइकिङ र बाइकिङमा आउने योजना बनाउन लागी। यस्तैमा जीपले अचानक लामो मोड लियो। कनिकाको मुटु अचानक धड्किन लाग्यो। उसलाई लाग्यो लौ एक्सिडेन्ट हुन लाग्यो कि के हो। भीमफेदी क्रस गरेपछि कनिकाले अग्ला

पहाडको टुप्पातिर गाडीहरुको बथान देखी। उसले ड्राइभरलाई सोधी, 'हामी जाने बाटो त्यही हो?'

ड्राइभरले जवाफ दियो, 'हो। त्यही बाटो हो हामी जाने। बाटो अलि साँघुरो साँघुरै छ। कुलेखानीसम्म मात्रै हो। त्यसपछि त सजिलो छ।'

मोटर उकालो लागेपछि कनिकाको मन शान्त हुन सकेन। बाटो साँघुरो थियो। भाडाका जीपहरु तँछाडमछाड गर्दै ओहोरदोहोर गरिरहेका थिए। त्यति सानो बाटोमा पनि डरै नमानी ओभरटेक गर्ने सवारी देखेर छक्क परेकी थिई कनिका। त्यसमाथि स्पिडमा कुनै कन्ट्रोल थिएन। मोडमा हर्न बजाउने संकेत चिह्न लेखिएका प्लेटहरु खुइलिइसकेका थिए। कनिकाले झ्यालबाट बाहिर हेरी। अपराह्नको घाममा निकै तल पुरानो भीमफेदी बजार टल्किइरहेको थियो। कनिकाले त्यो सौन्दर्यलाई आफ्नो मनमा सजाउन सकिन। त्यति डराउनुपर्ने त केही थिएन। ड्राइभर दक्ष थियो। तैपनि ऊ डराएकी थिई, उचाइको साँघुरो बाटोसँग।

बल्लतल्ल उकालो सकियो। ड्राइभर शौचालयतिर लाग्यो। कनिकाले चारैतिर हेरी। कतै देखिन उसले अलि गतिलो ठाउँ। अप्ठेरो अप्ठेरोमा थिई ऊ। छेउको एउटा होटल एन्ड लजमा पसी। त्यहाँबाट निस्किँदा ऊ फ्रेस थिई।

कुलेखानीको ओरालो ओर्लिंदै गर्दा उनीहरुको अगाडि निकै चर्को फुर्ति देखाएर कुदिरहेको जीप उताबाट उक्लिइरहेको एउटा जीपसँग नराम्रोसँग ठोक्कियो। दुवै जीप दुईतिर पल्टिए। ओर्लिंदै गरेको जीप दुई बल्ड्याङ खाएर रुखमा अड्कियो। उक्लिँदै गरेको जीप सडक छेउको पाखामा पल्टियो। एकै छिनमा त्यहाँ कोलाहल मच्चियो। तै कसैको ज्यान गएको थिएन। घाइते सबै थिए। साबूत कोही थिएन। अधिकांशको हात भाँच्चिएको थियो। कसैको खुट्टो च्यापिएको थियो।

कोलाहलको बीचमा एउटा खाली मिनीबस आयो सेनाको। त्यो मिनी बस दुर्घटनाको खबर पाएर आएको थिएन। आफ्नो नियमित काममा कतै जाँदै थियो। त्यहाँको बिजोग देखेपछि बसले अफिसमा सम्पर्क गऱ्यो। घाइतेहरुलाई हेटौंडा अस्पताल पुऱ्याउन बसमा राखियो।

कनिकाले यस्तो दुर्घटना यसअघि कहिल्यै देखेकी थिइन। ऊ घाइतेहरुलाई मद्दत गर्न र उनीहरुको फोटो खिच्न व्यस्त भई। उसलाई त्यति बेला लाग्यो, रिपोर्टरको जीवन पनि गजबको हुने रहेछ। अरु पीडामा परेका समाचार बनाउनुपर्ने। घाइतेको मल्हमपट्टीमा होइन, क्यामेराको एंगल मिलाउन जुट्नुपर्ने।

जे भए पनि, उसको खातामा एउटा अर्को आँखोदेखी समाचार थपिएको थियो।

# २२. तिमी नै त हौ मेरो आँखा चार्ली!

चितवनबाट फर्किएपछि कनिका रिपोर्टिङका लागि नयाँ फिल्डको खोजीमा थिइ। सुदिप्ती उसलाई भन्दै थिइ, 'तँ अब यहाँका हाइ–प्रोफाइलको पनि स्टडी गर्न थाल। दे आर भेरी इन्ट्रेस्टिङ। वी हायभ टू एक्सपोज सम अफ देम फर देयर रङ डुइङ।'

नट अ व्याड आइडिया – कनिकाले सोची। यत्तिकैमा उसको भाइबर बज्यो। सुदिप्तीले जिस्क्याई, 'लौ आयो, डार्लिङको फोन।'

शंका थिएन। फोन त डार्लिङकै थियो। चार्लीले खबर दियो, 'ड्याडीको अपरेसन छ रे। मी कमिङ आजै रातिको फ्लाइटबाट। तिमी एघार बजे एयरपोर्ट आउन सक्छयौ एउटा गाडीको व्यवस्था गरेर?'

कनिकाले भनी, 'ओके। आइ वील वी देयर।'

कनिका सक्ड थिइ। कतार उडनुभन्दा पहिले चार्लीले उसलाई भनेको थियो, 'तिमी मेरो मम–ड्याडको खबर बुझ्दै गर है।' तर, उ चार्ली उडेदेखि एकदिन पनि उसको घरमा गएकी थिइन। उसले साह्रै गिल्टी फिल गरी। वास्तवमा रिपोर्टिङमा लागेदेखि उ त्यसैमा डुबेकी थिइ। एउटा असल रिपोर्टर बन्ने ध्याउन्नमा मानिसका सामान्य शिष्टाचारहरुमा पनि उसको ध्यान गएको थिएन।

उसले सुदिप्तीलाई सुनाइ। सुदिप्तीले ठटेउला पारामा भनी, 'अब तीन दिन रिपोर्टर साहिवा आरामले गायव। के हुन्छ त अब रिपोर्टिङको?'
कनिकाले जवाफ दिइ, 'डोन्ट वरी। कनि वील कम टू योर सर्भिस टुमारो।'

त्यसपछि उसले एउटा प्राइभेट ट्याक्सी वुकिङ गरी एघार बजे एयरपोर्टका लागि। त्यसपछि सुदिप्तीलाई कफीका लागि रिक्वेष्ट गरी। उनीहरु दुवै कफी पसल पुगे। त्यो उनीहरुको अल्टिमेट डेस्टिनेसन बनिसकेको थियो। उनीहरुले कफीसँगै व्ल्यूवेरी केक खाए। कनिकाले भनी, 'सुदि, मलाई काम पुगेन। अलि मज्जा आउने रिपोर्टिङमा लगाउ न।'

जवाफमा सुदिप्ती केही बोलिन। कनिकाको जाँगर देखेर उ छक्क परेकी थिइ। उसलाई कताकता लागेको थियो, यस्तै हो भने कुनै दिन यसले मलाइ नै टप्काउँछे। कनिकाप्रति उसको मनमा इर्ष्या जागेको थियो। केटीहरुको मनमा इर्ष्या जागेपछि कसैको केही लाग्दैन। कनिकाको मनमा यस्तो केही थिएन। उ खुल्ला थिइ। सुदिप्तीले भनी भने उ काम छाडेर अन्त पनि जान सक्थी। सुदिप्ती कनिकालाई हटाउने पक्षमा थिइन। उ कुनै किसिमले उसलाई आफनो अण्डरमा राख्न चाहन्थी। त्यो भन्दा बढी केही गर्नु उसैका लागि आत्मघाती हुने उसले बुझेकी थिइ।

कनिका राति साढे दश बजे नै एयरपोर्ट पुगी। ट्याक्सी पार्किङ भरिभराउ थियो। तर, एयरपोर्टमा चाहिने जति उज्यालो थिएन। उ छेउको कफी पसलमा पुगी। एक कप कफी लिइ र पिउन थाली। त्यहाँ उसले चुरोटको तलतल मेट्न भने पाइन। किनभने त्यो नन स्मोकिङ जोन थियो। कफी सिध्याएर उ पार्किङ एरियातिर लागी। आफ्नो व्यागबाट सिगरेट निकालेर सल्काइ। त्यत्तिकैमा कुनै एउटा जवान केटो त्यहाँ देखा पर्‍यो र अंग्रेजीमा बोल्यो, ‘ओह, हाइ।’

कनिकाले ध्यान दिइन। उ आफनै सुरमा चुरोट पिउन थाली।

केटो अलिकति नजीक आएर भन्यो, ‘क्यान आइ हायव योर लाइटर प्लिज।’

कनिकाले सुनेको नसुन्यै गरी।

केटो कस्ती ठीस केटी रहिछ भन्दै हिंड्यो।

राति एघार बजेर दश मिनटमा ल्याण्ड गर्‍यो कतार एयरवेज। चार्ली ओर्लियो र कनिकालाई कल गर्‍यो।

कनिकाले भनी, ‘म पर्खी रहेकी छु बाहिर।’

चार्लीले भन्यो, ‘लगेज लिएर निस्किन अझै आधा घण्टा लाग्छ होला। यहाँ त टिकी नसक्नुको भिड छ। धकमधक्का चलेको छ। रिपोर्टरहरुको आँखामा परेको छैन कि के हो यो ठाउँ?’

कनिकाले जवाफ दिइ, ‘नपरे पनि अब परिहाल्यो नि। तिमी नै त हौ मेरो आँखा।’

कनिकाको जवाफले चार्ली अभिभूत भयो।

# २३. अस्पतालमा कनिका

चार्लीका ड्याडीको मुटुको अपरेसन भयो। आशा गरेभन्दा निकै पहिले तंग्रिए उनी। अस्पतालमा कनिकाले एकदिन पनि छोडिन चार्लीलाई। विरामीको स्याहार–सुसारमा पनि लागिरही। एक साता त्यत्तिकै बित्यो उसको। समाचारको दुनियाँबाट पूरै बाहिर थिइ उ। ड्याडीलाई अस्पतालबाट घर ल्याएपछि चार्ली काममा फर्किन हतारिएको थियो। कनिकाले उसको मनस्थिति बुझेकी थिइ। त्यसैले यसलाई स्वाभाविक रुपमा लिइ। उ आफैं पनि समाचारको दुनियाँमा फर्किन हतारिएकी थिइ।

अस्पतालबाट फर्किएको भोलिपल्ट चार्ली र कनिकाले डिनर खाए – सोल्टीको इण्डियन रेष्टुराँमा। कनिकाले क्यानवरी जूससँग अव्सोल्युट भोड्का मगाई। चार्ली व्हिस्कीमा रमायो। उनीहरु रेष्टुराँको ग्यालरीमा बसेर पिइरहेका थिए। भित्र सबै नन स्मोकिङ जोन थियो। ड्रिक्स सकिएपछि दुवै भित्र गए। परौठा र चिकन मसाला अर्डर गरे। चार्लीले कुरा सुरु गर्यो – 'म सन्डे फर्किंदैछु। तिम्रो केही कुरा भए भन कनि।'

कनिले जवाफ दिई, 'तिमीलाई त फर्किंनैको हतार छ। मेरो के कुरा हुनु र? कुरा भए पनि तिमीलाई देखेपछि सबै बिर्सिन्छु। झगडा गर्न मन लाग्छ तिमीसँग।'

चार्लीले हाँस्दै भन्यो, 'गर न त झगडा। मलाई पनि तिमीले झगडा गरेको मन पर्छ। क्या आनन्द आउँछ तिम्रो करकर सुनेर।'
त्यसपछि चार्लीले आफ्ना व्याकप्याकबाट रंगीचंगी कागजले बेरिएको एउटा सानो डिव्वा निकाल्यो र कनिकालाई दिँदै भन्यो, 'यो तिमीलाई।'
कनिकाले सोधी, 'के हो यो?'

चार्लीले जवाफ दियो, 'खोलेर हेर न।'

कनिकाले निकै तरकिव लगाएर रंगीचंगी कागज उधारी। भित्रको बट्टा देख्नासाथ उ खुशी भइ, 'वाह! आइफोन सेभेन। थ्यांक यू डियर।' खुशीको आवेगमा उसले चार्लीको ओठसँग आफ्नो ओठ जोडी। एकैछिनका लागि उनीहरु रेष्टुराँमा आएका मानिसहरुको आकर्षणको केन्द्र बने।

उनीहरु खाना खाएर निस्किँदा बाहिर चकमन्न भइसकेको थियो। कान्तिपुरको वातावरणमा अलिकति चीसो थपिएको थियो। कनिकाले भनी, 'आज घर जाने मूड नै छैन। कतै जाऔँ न!' चार्लीले बुझीहाल्यो, कनिकामाथि रतिराग सवार भएको छ।

उनीहरु मामा'ज लजमा पुगे बास बस्न। कनिकाले घरमा मामुलाई फोन गरी र भनी, 'आज म साथीको घरमा छु सीता पाइलामा। यतै बस्छु है मामु।'

चार्लीले पनि घरमा फोन गरेर नआउने जानकारी दियो। उनीहरु त्यो रात एक आपसमा एकाकार भए। जिस्किँदा जिस्किँदै र चल्दाचल्दै रात बितेको पत्तै पाएनन् उनीहरुले। बिहानीपख उनीहरु सुते। उठ्दा नौ बजिसकेको थियो। हतार हतार फ्रेस भएर निस्किए उनीहरु। चार्लीले कनिकालाई उसको घर छेउमा छाडिदियो।

कनिका घर पुगी। घरमा कोही थिएन। बाबा–मामु दुवै अफिस गइसकेका थिए। घरमा काम गर्ने रोशनी दिदीले कनिकालाई खान खान बोलाइन्। कनिकाको खाना खाने मूड थिएन। उसले भनी, 'दिदी म खाना खान्न। तपाईँले खाए हुन्छ।' त्यसपछि उ वाथरुम छिरी। नुहाइ। हलुका मेकअप गरी। क्यामरा बोकी र हिँडी अफिसतिर।

उसका आँखामा अस्पतालका अव्यवस्थाहरु नाचिरहेका थिए। उसको मूड ती अव्यवस्थाको रिपोर्टिङ गर्ने थियो। उसले सुदिप्तीलाई सुनाइ। उसले सँधै झैं कनिकालाई सुऱ्याइ। कनिका लेख्न थाली। कहाँबाट सुरु गर्ने? दोधारमा थिइ उ। नर्सिङ स्टेसनदेखि क्याविन म्यानेजमेन्टसम्म जताततै अव्यवस्था मात्र थियो। अस्पतालका लागि रोगीहरु रोगी नभएर दुहुनो गाई थिए। नर्सहरु हेलेन केलरका आदर्शमा होइन, व्यापारमा पोख्त थिए। उनीहरु न त रेस्पोन्सिभ थिए, न संवेदनशील। दुईजना भेटियो कि गफ सुरु भइहाल्यो। एक्लै भएपछि फेसबुक।

कनिकाले सोची, एउटा अस्पतालको कथामात्र किन लेख्नु? किन दुई चारवटा अस्पताल घुमेर स्टोरी तयार नगर्ने? उसले सुदिप्तीसँग सल्लाह गरी। सुदिप्तीले भनी, 'हो, त्यसै गर। स्टोरी कडा बना। यी डाँकाहरुको हुलिया बिगार्नु पर्दछ।'

कनिका विभिन्न सरकारी र निजी अस्पतालहरुको चक्कर लगाउन थाली। देशको सबैभन्दा ठूलो र पुरानो वीर अस्पतालको चक्कर लगाउँदा उसलाई साह्रै टीठ लाग्यो। विरामीहरु खचाखच छन्। सबैको विश्वास छ अस्पतालप्रति। तर, ठूलो अव्यवस्थाको शिकार बनेको छ यत्रो अस्पताल। त्यहाँका कर्मचारीहरुसँग कुरा गर्दा उसलाई वीर अस्पताल अस्पताल नभएर राजनीतिको फोहोरी अड्डा जस्तो लाग्यो।

साँझ परेपछि उ अफिस फर्किइ। त्यसपछि रिपोर्टिङ तयार पार्न थाली। उसको ध्यान जानै सकेन रिपोर्टिङमा। उ चार्लीलाई सम्झिन थाली।

ओहो, हतारमा उसले आइफोन सेट गर्नै बिर्सेकी थिइ। उसले व्यागबाट आइफोन निकाली र त्यसलाई सुमसुम्याउन लागी...

# २४. कनिकाको पे स्केल 'महिनाको ५० हजार'

चार्ली कतार उड्ने अघिल्लो दिनमात्र कनिकाले थाहा पाइ - चार्लीले उसको रिपोर्टिङको कामलाई सिरियस्ली लिएको छैन। कफी पिउँदै गर्दा स्पष्टै भन्यो चार्लीले, 'तिमीले रिपोर्टिङ गर्छ्यौजस्तो मलाइ त लागेन। आर यू रियल्ली सिरियस अन दिस फ्रण्ट? म यता फर्किएपछि पनि तिमी रिपोर्टिङ नै गरिरहन्छ्यौ त? आइ मीन जर्नलिज्म।'

चार्लीको कुराले कनिका मनमनै झनक्क रिसाइ। तर, प्रकटमा केही बोलिन। उसको कुरा नबुझेको जस्तो अभिनय गरी। चार्ली भन्दै थियो, 'तिमी जस्तो जर्नलिज्मको कुनै व्याकग्राउण्ड नभएको, विजनेस स्टडीमा लागेकी केटीले कसरी जर्नलिज्म गर्लिउ? हो, म नफर्किउन्जेलका लागि मन बहलाउन पाएकी छौं। राम्रो हो। हामी पर्मानेन्टली सेटल भइसकेपछि त जर्नलिज्म गर्नु हाम्रो लागि अनुकूल पनि नहोला।'

कनिकाको मनमा चसक्क विज्झ्यो चार्लीका कुरा। विजनेस स्टडीमा लागेकाहरु जर्नलिज्ममा फिट हुँदैनन् भन्ने उपसंहारलाई त उसले खासै महत्व दिइन। दुनियाँका धेरै मानिस जर्नलिज्मभन्दा बेग्लै कोर्स पढेर पत्रकारितामा आएका छन् र लोकप्रिय भएका छन्। चार्ली कफीलाई जति आधुनिक युगको लोकप्रिय ड्रिंक्स भन्छ, त्यत्ति नै लोकप्रिय बनेको छ रिपोर्टिङ। उसको अर्को वाक्य 'हामी पर्मानेन्टली सेटल भएपछि' बाट उसले यतिमात्रै बुझी – चार्ली कनिकालाई बच्चा जन्माउने, पुतली जस्तो सजिएर चार्लीसँग सोसल इभेन्ट्समा हिँड्ने र सँधै हाइ र हि मा रमाउने व्यक्तिगत फेशनवेल यन्त्रका रुपमा राख्न चाहन्छ। चार्लीको यो कुरा उसका लागि फिट होला, तर कनिकाको कुरै बेग्लै थियो। उ फेमिनिष्ट थिइन। उसले फेमिनिज्म बुझेकी पनि थिइन। चार्ली जस्तो साथी उसको आवश्यकता थियो। त्यसो भन्दैमा चार्लीका लागि आफ्नो मन परेको पेशा छाड्न उ तयार थिइन।

एकछिन अघिसम्म चार्लीसँग उसको तन र मन दुवै मिलेको थियो। एकैछिनमा स्थिति बद्लियो। समयान्तरमा चार्लीसँग कनिकाको मन नमिल्ने देखियो।

त्यो साँझ कनिका चार्लीसँग स्वाभाविक रुपमा रमाउन सकिन। उसलाई एक मन त लाग्यो, चार्लीले गिफ्ट दिएको आइफोन सेभेन पनि फिर्ता दिउँ। उसले त्यसो गरिन। धेरैबेर सोची, सम्बन्ध त्यो हदमा पुगेको छैन। त्यस्तो केही भइहालेको पनि थिएन। यो त चार्लीको एउटा टिप्पणी थियो जसले कनिकाको मन तीतो बनाएको थियो। पर्मानेन्ट सेटलमेन्टको त कुरै उठेको थिएन। उसले सोची- त्यो कुरा जहिले पर्छ तहिले पर्छ। अहिले देखि नै त्यसैमा रुमल्लिनु किन परेको छ र?

उनीहरुले छिटोछिटो कफी सिध्याए। चार्ली पनि अलिकति बिजी थियो र कनिकालाई रातिको सिफ्ट शुरु नहुँदै वीर अस्पतालको तमाशा हेर्न पुग्नु थियो। कनिका अस्पताल रिपोर्टिङमा लागेको थाह पाएर चार्लीले उसलाई आफ्नो एकजना परिचित ल्याब असिष्टेण्टको नम्बर दिँदै भनेको थियो, 'यो मेरो पर्सनल फ्रेण्ड हो। तिमीलाई परेको मद्दत गर्न सक्दछ।'

कनिका तीन दिनदेखि वीर अस्पतालको चक्कर लगाइरहेकी थिइ। तै पनि, त्यहाँको छेउ–पुच्छर वुझ्न सकेकी थिइन। एकजना डाक्टरसँग कुरा हुँदा उनले भनेका थिए, 'खोइ अब यहाँको इतिवृत्तान्त तपाई रिपोर्टरहरुले पत्ता लगाउनु भयो भने त कुन्नि। यहाँ काम गरेको पाँच वर्ष भइसक्यो। मैले त अहिलेसम्म केही बुझेको छैन। देशको ठूलो अस्पताल हो। अस्पतालमाथि सामान्य जनताको ठूलो विश्वास छ। तर, त्यही जनतालाई राम्रो सेवा दिन सकेको छैन अस्पतालले।'

कनिकाले यो तीन दिनको बीचमा सबै डिपार्टमेण्टको चक्कर लगाएकी थिइ। जनरल वेडमा भर्ती गरिएका कतिपय विरामीको अवस्था कठिन थियो। डाक्टरले लेखिदिने अधिकांश औषधि अस्पतालमा निःशुल्क उपलव्ध थिएन। सामान्य विरामीका लागि यो साह्रै पीडादायक अवस्था थियो। एकजना रोगीले कनिकालाई बताएका थिए, 'औषधि किन्ने सागवास भएको भए यहाँ किन आउनु पर्थ्यो र? यत्रो नाम चलेको ठूलो अस्पतालमा भर्ती भएको छु। सात दिन जति त औषधि दिए। अहिले धर्मशालामा सुते जत्तिकै छ। लौ मैसाव, हाम्रो आवाज उठाइ दिनुपर्‍यो।'

उसले यो पनि थाह पाइ - कतिले अस्पताललाई होस्टल बनाएका छन्। उनीहरुलाई जाँच्न डाक्टरहरु सधैँ राउण्डमा आउँछन्। भर्ना भएका कति विरामी छ सात महिनादेखि बेडमा नै

छन – अस्पतालका रजिष्टर्ड पेसेन्ट। ती बिहानको खानापछि अस्पतालबाट बाहिर निस्किन्छन् र बेलुकी राउण्ड अगाडि आएर अस्पतालको बेडमा पल्टिन्छन्।

चार्लीको साथी ल्याब असिष्टेण्टलाई भेटेर कुरा गरेपछि त कनिकालाई चक्करै लाग्यो। रामप्रसादको रिपोर्ट दिलकुमारीको नाममा र हर्षरत्नको रिपोर्ट द्रव्यरत्नको नाममा रुपान्तरित भएका केस त कति छन कति। ल्याब असिष्टेण्टले उसलाई सुनायो, 'हामीसँग आधारभूतदेखि ठूला विशेषज्ञ सेवाहरु समेत उपलव्ध छन्। नाम चलेको ठूला डाक्टरको पनि कुनै कमी छैन। कमी एउटै छ। त्यो भनेको हामीकहाँ व्यवस्थापन छैन। घीनलाग्दो राजनीतिक र सरकारी हस्तक्षेप छ।'

कनिकाले त्यो दिन आफ्नो अस्पताल रिपोर्टको पहिलो भाग पोष्ट गरी। केही बेरमा नै त्यो पोष्ट भाइरल भइहाल्यो। त्यसको भोलिपल्ट दिनभरि नै सुदिप्तीको फोनको घण्टी बजिरह्यो। कनिकाको रिपोर्टले स्वास्थ्यका केही अधिकारी रन्थनिएका थिए। सरकारका मन्त्री र अधिकारीहरु अस्पताल निरीक्षणमा गए। सरकारले जाँच आयोग त गठन गरेन। सेवामा 'देखिने' खालको सुधार ल्याउन समितिको गठन गर्‍यो।
सुदिप्ती खुशी थिइ। उ खुशी हुनु भनेको 'क्याप्टेन मोर्ग्यान' र कफीको ककटेल्स विथ 'रिच स्यान्स्क' हुन्थ्यो। सुदिप्ती र उ रोड हाउस छिरे। संयोग, उनीहरुले स्मोकिङ जोनमा ठाउँ पाए। खासमा, त्यो स्मोकिङ जोन–सोन केही थिएन। कान्तिपुरमा 'प्रहरी मेरो साथी' हुनुभन्दा अघिदेखि सरकारले बार र रेष्टुराँलाई नन–स्मोकिङ पव्लिक प्लेसमा राखेको थियो। विकल्पमा रेष्टुराँहरुले स्मोकर्सलाई रिझाउन बरण्डा र यस्तै खुला भाग स्मोकर्सका लागि छुट्याइदिएका थिए।

त्यो दिन मस्तै पिए दुई कोरलीले। खुशीको मूडमा सुदिप्तीले कनिकाको पे तोकि दिइ - फिफ्टी थाउज्याण्ड रुपी अ मन्थ। 'ओहो यत्रो पैसा', कनिका दंग परी। उसले दुई महिनादेखि गरेकी नि:शुल्क रिपोर्टिङको फेज सकियो। झण्डै डेढ घण्टापछि मनहर आइपुग्यो। सप्तरीको तन्नेरी मनहर यादव एमबीए सकेर कामको खोजीमा कान्तिपुर आएको थियो। काम त उसले तुरुन्तै पायो एउटा इन्स्योरेन्स कम्पनीमा। कामसँगै प्रेमको झिल्को पनि पायो। एउटा पार्टीमा उसको आँखा जुध्यो सुदिप्तीसँग। कनिकालाई सुदिप्ती रिलेशनशीपमा छे भन्ने त थाह थियो। यसबाहेकका अन्य समाचार उसका लागि पनि नयाँ थिए।

मनहरलाई देख्नेबित्तिकै सुदिप्ती मस्किन थाली। उसले कनिकासँग छुट्टी मागी। जवाफमा कनिका हाँसी मात्र। सुदिप्तीले हतारहतार म्यानेजरलाई बोलाइ र बिल अफिसमा पठाउन इन्स्ट्रक्ट गरी। त्यसपछि उ मनहरसँग लठारिन पुगी।

कनिकाको एउटा मन चार्लीलाई रोडहाउसमा बोलाउन चाहन्थ्यो। अर्को मन हर्ट थियो। कनिका व्दिविधामा थिई। उसले सिगरेटको लामो सर्को तानी र आकाशमा मँडारिएका वादलहरुको नृत्यमा मग्न भइ...

# २५. डाक्टर अनिकेतको रुपले मोहित कनिका

डाक्टर अनिकेतलाई देख्ने वित्तिकै कनिका दंग परी। इन्स्ट्यान्ट क्रस भयो उसको। त्यस्तो साउन्ड सेपको मान्छे देखेकै थिइन उसले। कति राम्रो हो कति। मनमनै सोची - यो मान्छेसँग मेरो त म्याच नै हुँदैन होला।

'वेलकम, आउनुहोस्। म अनिकेत, डाक्टर अनिकेत। तपाईं पत्रकार हगि ? तपाईंले नै हो मसँग कुरा गर्न खोजेको?'

कनिकाले जवाफ दिइ, 'हो सर! मैले नै हो सरसँग कुरा गर्न खोजेको।'

अनिकेतले भन्यो, 'सोध्नुहोस्, के सोध्न चाहनुहुन्छ।'

कनिकालाई सोध्न त मन लागेको थियो, 'तपाईं कति राम्रो! कसरी हुनु'भो यस्तो लोभ लाग्दो।'

तर, उसले आफ्नो मनलाई कन्ट्रोल गरी र सोधी, 'तपाईं यो सरकारी अस्पतालको प्रमुख रेडियोलोजिष्ट हुनुहुन्छ। उपचारका सिलसिलामा विरामीहरुको विभिन्न प्रकारका जाँच गर्नु हुन्छ तपाईंहरु। पैसा तिर्न सक्नेले त त्यस्तो जाँच सजिलै गराउँछन्। पैसा नभएकाहरुको के हुन्छ?'

अनिकेतले जवाफ दियो, 'त्यस्ता विरामीहरुको लागि सरकारको निर्णय अनुसार हामीले सहुलियत दरमा सेवा उपलव्ध गराएका छौं।'

कनिकाको अर्को प्रश्न थियो, 'त्यसो भए उपचार नपाएर यहाँबाट कोही फिर्ता जानु परेको छैन, होइन?'

अनिकेतले भन्यो, 'त्यस्तो त कहाँ होला र? त्यस्तो सेवा कसरी लिन सकिन्छ भनेर नजान्ने पनि थुप्रै हुन्छन्। कति विरामीसँग सरकारले तोकेको न्युनतम सहुलियत रकमसमेत हुँदैन। कति विरामी सेवा लिनेहरुको लाइनमा बस्न सक्दैनन्। सरकारी सहुलियत त्यही २० प्रतिशतले पाएका होलान।'

कनिकाको मन डाक्टरको कुरामा केन्द्रित हुन सकेको थिएन। डाक्टर बोलिरहँदा उ बेला बेलामा कर्के आँखाले डाक्टरलाई हेर्थी। यसरी हेर्दा एकपटक त डाक्टरसँग उसको आँखा जुध्यो। कनिकामात्र अनिकेततिर तानिएकी थिइन। डाक्टरलाई पनि कनिकाको शरीर सौन्दर्य र फ्री फ्रयाङ्क अप्रोचले आकर्षित गरेको थियो। बेला बेलामा उ पनि कनिकाको क्लिभेज र कर्भतिर आँखा लगाइरहेको थियो। एउटा प्रश्नको जवाफ दिँदै गर्दा अनिकेतको आँखा कनिकाको ट्रान्सप्यारेन्ट टपबाट भित्र कतै छिरेको थियो। डाक्टर र रिपोर्टर बीचको आकर्षण दोहोरो थियो। दुवैको मनमा एकअर्कासँग फ्लर्ट गर्ने र डेटिङ जानेसम्मका कल्पनाले चिहाइसकेका थिए।

वार्ता सकिएपछि कनिका उठ्नै लाग्दा डाक्टर अनिकेतले भन्यो, 'लेट्स हायभ अ कफी टुगेदर। होप यू डोन्ट माइन्ड।'

कनिका खुशी भइ, 'ओहो, आइ फिल अनर्ड। बट, कफी विदाउट स्मोकिङ इज समथिङ आइ डोन्ट थिङ्क अवाउट।'

डाक्टरले जवाफ दियो, 'नो वरी। हामी मेरो पर्सनल लाउन्जतिर जाउँला।'

कफीमा कनिकाको र डाक्टरको टेष्ट मिल्यो। दुवै स्ट्रङग अमेरिकानोका पारखी। अनिकेतको पर्सनल लाउन्जमा स्मोकिङको सुविधा थियो। अनिकेत आफैं पनि माइल्ड स्मोकर थियो। सिगरेटमा पनि दुवैको च्वाइस मिल्यो मार्लवोरो लाइट। लाउन्जमा बसेर उनीहरु गफ गर्न लागे। कनिकाले भनी, 'ल, भैगो हामीले त सिगरेट छाड्न सकेनौं। तर, प्रत्येक पाँच मिनटमा दुनियाँलाई सिगरेट छाड भनेर अर्ती दिने डाक्टरहरुले नै सिगरेट तान्न थालेपछि के होला यो देशको स्वास्थ्यको?'

कनिकाको कुरा सुनेर डाक्टर अलिकति लजायो। कुनै जवाफ भने दिएन। त्यसपछि उनीहरुका बीचमा फायर एण्ड आइसको पिज्जादेखि घरे–कवावको विरयानीसम्मका कुरा

भए। सिंगल माल्ट र सिंगापुर ककटेलका चर्चा भयो। उनीहरुले कान्तिपुरको डल लाइफको निकै कुरा काटे। पार्टीहरु सबै एकै प्रकारका हुने, त्यसमा कुनै रोचक कुरा नहुने निष्कर्ष निस्कियो। कान्तिपुरका मानिस कपडा फेरी फेरी लगाउन जान्दछन् तर कुरा फेरी फेरी गर्न जान्दैनन्। सबै पार्टीमा एकैप्रकारका कुरा गर्दछन भन्ने उपसंहारमा आएपछि कनिका डाक्टर अनिकेतसँग छुट्टिइ।

त्यहाँबाट उ सिधै मकैबारी चिया पसलतिर लागि। त्यहाँ एउटा फोटोग्राफरसँग भेट्नु थियो। उ पुगेको केहीबेरपछि फोटोग्राफर आइपुग्यो। उसले केही व्यवहारिक प्रश्न गरी। अनलाइनका लागि सुदिप्तीले एउटा फोटोग्राफर खोज्न लगाएकी थिइ कनिकालाई। यो फोटोग्राफरले उसको ड्याडको अफिसमा काम गरिसकेको थियो। कुरा सकिएपछि फोटोग्राफरलाई उसले सुदिप्तीसँग भेट्न पठाई। आफू चियासँग गिजोलिएर बसी।

अनिकेतलाई भेटेदेखि नै कनिकाको मनमा अनेक तर्कनाहरुले जन्म लिएका थिए। तर्कनाको क्रममा उसले चार्लीलाई सम्झिइ। अनिकेत जतिसुकै चार्मिङ भए पनि चार्लीसँग उसको तुलना हुन नसक्नेमा उ सहमत थिइ। चार्लीको अनुपस्थितिमा डाक्टरसँग यसो लाइट रिलेसनसीप मेन्टेन गर्दा के होला त? भन्ने कुरा पनि उसको मनमा खेलिरहेको थियो। उ सोचिरहेकी थिइ, लाइट भन्दा भन्दै सम्बन्ध गहिरियो भने त वर्वाद हुन्छ। कुन अनुहार देखाउँछे उसले चार्लीलाई? आखिर चार्ली उसको आफ्नो च्वाइस थियो। त्यो पनि पहिलो। चार्ली त अनेक अप्सनहरुसँग खेलिरहेको थियो। कनिकाले नै बढाएकी थिइ मित्रताको हात। कनिकाले नै लुटपुट्याएकी थिइ चार्लीलाई। चार्लीले उसलाई दुई वर्ष पर्खिन भनेको हो। त्यसमा पनि नौ महिना त बितिसक्यो। चार्ली दुई पटक आइसक्यो कान्तिपुर।

कनिका डिष्टर्ब भइ। चिया पसलबाट अफिस गइ। सुदिप्ती अफिसमा थिइन। नयाँ फोटोग्राफरलाई काम असाइन गरेर एक घण्टाको लागि कतै निस्किएकी थिइ। कनिकाले एउटा सानो नोट लेखेर उसको टेवलमा राखी दिइ : 'मी डिस्टर्ब। इन रोडहाउस लाउन्ज। कम ओभर प्लिज।'

# २६. कनिकालाई च्वाइस - सती सावित्री बन्ने कि मीरा बाई?

सुदिप्तीसँग अस्पतालको रिपोर्टिङ शेयर गरेर कनिका लाउन्जमा आराम फर्माइरहेकी थिइ। त्यति नै बेला उसको मोवाइल बज्यो। उसले फोन उठाइ। उताबाट आवाज आयो, 'हाइ, म अनिकेत। दिस इज माइ प्राइभेट नम्वर। क्यान वी मीट समटाइम टूडे?'

कनिकालाई अचम्म लाग्यो। बडो चालु रहेछ डाक्टर। भेटेको एक हप्ता भएको छैन, लाइन मार्न थाली हाल्यो। कनिकाले जवाफ दिइ, 'ओके। हवाट टाइम एण्ड हवेयर ?'

अनिकेतले जवाफ दियो, 'कतै जाउँला नि। तपाईंलाई कहाँबाट पिक गरुँ म ?'

उसले अनिकेतलाई त्यही मोडमा आउन भनी जहाँ चार्ली उसलाई पीक अप गर्न आउँथ्यो मोटरसाइकल लिएर।

उसको मनमा कुरा खेल्न थाल्यो, डाक्टरले किन बोलाएको हो? सोची मसँग फ्लर्ट गर्न खोजेको हो कि? के हो? उसले आफूलाई दह्रो बनाइ। त्यसपछि डाक्टरलाई दिने जवाफ खोज्न थाली। के डायलग बोल्ने होला ? कसरी बोल्ने होला ? ऊ सोच्दै थिइ, सुदिप्ती उसलाइ खोज्दै त्यहीं आइ पुगी।

सुदिप्तीको दिमागमा कान्तिपुर शहरबारे विस्तृत रिपोर्टिंग गर्नुपर्ने योजना पाक्दै थियो। उसका साथीभाइहरुले शहरको वर्तमान स्थितिको अध्ययनका लागि पैसा जुटाएका थिए। उनीहरुले सुदिप्तीलाई यो कुरा भनेपछि सुदिप्ती तातेकी थिइ। किनभने, यसको स्पोन्सरसिपबाट मनग्गे पैसा आउने सोचेकी थिइ उसले।

शहरका समस्याहरुको रिपोर्टिंग गर्दा फोकस गर्नुपर्ने क्षेत्र थुप्रै थिए। शहरको नाली व्यवस्थापनदेखि सडक बत्तीसम्म, जतातत‌ै नागरिक सुविधाको अभावबाट रिपोर्टिंग शुरु गर्ने कि ? के गर्ने ? कन्फ्युज्ड थिइ सुदिप्ती।

कान्तिपुरका नगर व्यवस्थापकहरुले नागरिक सुविधाको अलिकति पनि ख्याल राखेका छैनन्। यति ठूलो भै सक्दा पनि शहरको कुनै मोडमा मानिसले आफूलाई फ्रेस गर्ने

शौचालयको व्यवस्थासम्म छैन। भन्न चाहीं एक्काइसौँ शताव्दीको शहर भन्ने, सुविधा चाहीं उन्नाइसौँ शताव्दीको दिने।

सुदिप्तीले कनिकासँग यो कुरा शेयर गरी। कनिका जस्तोसुकै रिपोर्टिंगका लागि पनि तयार थिइ। अल्वेज स्ट्याण्डबाई। तर, यो सानातिनो प्रोजेक्ट थिएन। कनिका एक्लैले पूरा रिपोर्टिंग भ्याउने कुरै थिएन। सुदिप्ती संकटमा थिइ। अफिसमा म्यानपावर ज्यादा थियो। थियो काम–पावरको कमी। मानिस हायर गर्न पनि भन्ने बित्तिकै को पाउनु ? भएकाबाट कसलाई लगाउनु ?

कनिकाले सुझाव दिई, चार हप्ता त म तानी दिन्छु। तर, पुरै शहरको नालीबेली त त्यतिले तयार हुँदैन। म काम गर्न थाल्छु। तिमी रिपोर्टिङ गर्न सक्ने फ्रेस केटाहरु खोज्न थाल। काम सकिइ हाल्यो। ती केटाकेटीलाई काम लगाउन र तह लगाउन म छँदैछु।

कनिकाको प्रस्तावले सुदिप्ती ढुक्क भइ। तर, नयाँ मान्छे खोज्ने कुरा उसको बुताको कुरा थिएन। उसले यसका लागि समाचारपत्रका प्रिन्ट संस्करणमा विज्ञापन दिने कुरा सोची। तर, कनिकालाई यो कुरा बताइन।

'प्रोव्लेम सकिएन त ? ल अब मेरो कुरा सुन। यहाँ लाउन्जमा त भित्ताको पनि कान हुन्छ। कफी शपमा हिंड' कनिकाले भनी। त्यसपछि उनीहरु कफी शपतिर लागे।

कनिकाले डाक्टर अनिकेतले फोन गरेको कुरा सुनाइ सुदिप्तीलाई। अनिकेतको सौन्दर्यको बखान त हिजै गरेर भ्याइसकेकी थिइ उसले। त्यसपछि उसले आफनो 'हाले दिल' पनि बताइ। चार्लीसँग विकसित भएको गहिरो सम्वन्धमा कुनै असर नपरोस् भन्ने पनि थियो उसलाई। साथै, अनिकेतसंग केही समय फ्लर्ट गर्ने मन पनि थियो। एक मनले ऊ चार्लीलाई धोका दिने पक्षमा थिइन भने अर्कोतिर अनिकेत नामको निषेधको फल नचाखेसम्म चित्तै नबुझ्ने भएको थियो।

सुदिप्तीले कनिकाका सबै कुरा सुनी। ऊ आफूले चाहेको कुनै पनि कुरा नगरी नछोडने स्वभावकी थिइ। उसलाई दुनियाँको कुनै मतलब थिएन। उसले कनिकालाई सुझाव दिइ, 'हेर कनि, मेरो स्वभाव त तँलाई थाहै छ। मलाई त आफूलाई लागेपछि लाग्यो लाग्यो। अहिले यहाँ चार्ली छैन। तँ उसलाई नपाएर नियास्रिएकी छेस। अब यो डाक्टर आएको छ। यसलाई पनि टेष्ट गर। केही बिग्रिने होइन। यो चार्लीलाई धोका दिएको नभएर इमर्जेन्सी म्यानेज गरेको कुरा हो भन्ने सोच। सती सावित्री बनेर हिँडछु भने तेरो च्वाइस हो। मीरा बाईको जस्तो एकतारे बजाएर हिंडछेस भने पनि हिँड।'

कनिकालाई उसको कुरा ठिकै लाग्यो। केटाहरुसँग संगत गर्दैमा बिग्रिने कुरा केही थिएन। शरीरको लिमिटेसन ननाघे भै हाल्यो। त्यो नाघेछ नै भने पनि के भो त ?

उसले अनिकेतलाई फोन गरी उसको घर छेउको मोडबाट अनिकेतले उसलाई पिकअप गर्ने भयो। ऊ घर पुगी र आफ्नो ओछ्यानमा लम्पसार परी।

# २७. प्रेमीको औकात

साँच्चै अप्ठेरोमा थिइ कनिका। डाक्टरले भेट्न निम्तो दिँदा उसँग 'हुन्छ'त भनिहाली, कुरा चाहिँ के गर्ने? केही सोचेकी थिइन। उसले सोच्नपर्ने आवश्यकता पनि देखेकी थिइन। उसले अन्दाज मारिसकेकी थिइ, डाक्टर अनिकेतले के खोजेको हो? कनिकाले यस्ता पचासौं प्रेमीको औकात नापिसकेकी छ। अब यो डाक्टरको पनि नापिहालौं न।

उनीहरु शहरको ठूलो रेष्टुराँमा भेटिए। अनिकेतले 'हाई' गर्दा कनिकाले 'ही' भनेर हात बढाइसकेकी थिइ। शायद डाक्टरले कनिकाको संकेत बुझेन र एकछिन अल्मलियो। त्यसपछि कनिकासँग हात मिलाउँदै उ रेष्टुराँ प्रवेश गऱ्यो। डाक्टरले कनिकालाई जति प्यामपर्ड गर्दै थियो, त्यति त उसलाई कसैले पनि गरेको थिएन अहिलेसम्म। चार्लीको कुरा अर्कै हो। उसले सम्झाएको हो कि, गाली गरेको हो कि प्याम्पर्ड गरेको हो त्यो थाहै हुँदैनथ्यो।

केहीबेरको भलाकुसारीपछि डाक्टरले विनम्र भएर सोध्यो, 'ड्रिंक्स अर्डर गरौं कि?'

कनिकाले भनी, 'हुन्छ।'

कनिकाले सेवेस्टियन व्हाइटको ग्लास मागी। अनिकेतले जीन–टनिक माग्यो। जीन–टनिक कुनै सेन्सेसनल ड्रिंक थिएन। कनिकाले बुझिहाली - यस्ता कुरामा डाक्टर अनाडी नै छ।

कनिकाले बुझेकी थिइ - यस्तो मिटिङको कुनै एजेण्डा हुँदैन। तै पनि, उसले औपचारिकता निर्वाह गर्दै सोधी, 'आजको हाम्रो भेटको मुख्य एजेण्डा के हो डाक्टर साहेव?'

डाक्टर बोल्यो, 'त्यस्तो एजेण्डा नै भनेर त केही छैन। साँचो कुराभन्दा आजको मेरो एजेण्डा तपाईँ नै हो।'

यस्तो जवाफको आशा गरेकी थिइन कनिकाले। भनी,'व्हाट?'

उसको मुख लाजले रातो भयो। उसलाई पुरानै अवतारमा सेटल हुन केहीबेर लाग्यो।

'यस, मेम साहब। मेरो कुरा त्यति नै हो। मैले तपाईँलाई देखेपछि इन्स्ट्यान्टली मनपराइहालेँ। यू आर सो इम्प्रेसिभ। मेरो मन उफ्रेर तपाईँको मनसँग जोडिन पुगिहाल्यो। म के गरौं त?'

कनिकाले मनमनै सोची - डाक्टर त हिन्दी सिनेमामा देखिने मजनुको अवतारमा पो देखियो। उसले यस्तै केही एक्स्पेट त गरेकी थिइ। तर, प्रस्तुती यति चर्को होला भन्ने सोचेकी थिइन। उसले डाक्टरलाई जवाफ दिइ, 'म त इनभल्भ्ड छु। मेरो व्वाइफ्रेण्ड छ।'

सुनेर अनिकेत झस्किएन। उसले पनि कनिकाबाट यस्तै जवाफको आशा गरेको थियो। उ बोल्यो, 'त्यसले के भो त? हामी एकआपसमा भेट्न र कुरा गर्न त सक्छौं नि होइन र कनिका?'

डाक्टरले पहिलो भेटमा नै कनिकालाई उसको नामले बोलाएको थियो। यसले उसलाई केही फरक त परेको होइन, तर रुढ सुनिएको थियो। कनिकाले त्यसलाई लामो तानिन। उसले पनि अनिकेतलाई नामैले बोलाउन थाली।

लन्च खाएर उनीहरु निस्किए। त्यति धेरै कुरा भएन। आँखा र इशाराको भाषा नै काफी थियो दुवैका लागि।

उनीहरु लन्च टेबलबाट उठे। रेष्टुराँको पार्किङमा अनिकेतको कार थियो। कनिकाले स्कुटी ल्याएकी थिइन। डाक्टरले सोध्यो, 'कहाँ छाडिदिउँ कनिकालाई?'

कनिका कारमा बसी। त्यसपछि आफनो व्यागबाट सिगरेट निकाली र सल्काइ। त्यसपछि भनी, 'मोटरमा स्मोक अलाउड त छ नि?'

नभए पनि तिमीले सल्काइसक्यौ। बरु तिम्रो अनुमति पाए म पनि सल्काउने थिए। अनुमति मात्र होइन सिगरेट पनि।'

कनिकाले अनिकेतलाई सिगरेट दिइ। डाक्टरले सिगरेट सल्कायो र बाटो घुमायो।

'किन म त दरबार मार्ग जाने हो। यो त घुमाउरो रुट परेन?'

अनिकेतले हाँस्दै जवाफ दियो, 'घुमाउनै खोजेको हो।

कनिका गुनगुनाइ, 'कान्छीलाई घुमाउने काठमाडौं शहर।

त्यसपछि कार दरबारमार्ग जाने मोडतिर लाग्यो।

# २८. संसदमा कनिकाको रिपोर्टिङ

कनिका खुशी थिई। पत्रकारितामा सक्रिय भएदेखि उसको दिमाग र दिल दुवै ठीक थियो। सुदिप्तीले उसलाई एउटा ठेगाना दिएकी थिई। नत्र त उसको कुनै ठेगाना थिएन। चार्लीको नाममा बुद्धचित्तको माला दायाँबाट बायाँ र बायाँबाट दायाँ घुमाउनु, दिनभर कफी पसलमा लम्पसार पर्नु र साँझ मन मिल्ने साथीहरुसँग जीन टनिक, तकिला वा भोड्का तन्काउनु बाहेक अरु कुनै रुटिन थिएन।

कोर्स बुक पढ्न मन नलाग्ने, क्याम्पस जान अल्छी लाग्ने, गए पनि क्याफेटेरियामा साथीभाइसँग गफ लडाएर टाइम पास गर्ने। अहिले कनिकालाई यस्ता कुरा सोच्न पनि मन लाग्दैन। ऊ आफनो लाइफ स्टाइलसँग खुशी छे। खुशी यस निम्ति पनि छ कि आफूप्रति मानिसको आकर्षण कति छ भन्ने थाह पाएकी छ। अनिकेत मात्र होइन, उसले लेखेका समाचारका मूल पात्रहरु नायक वा खलनायक जे भए पनि उसप्रति आकर्षित भएको, अझ मर्नै खोजेको थाह थियो उसलाई। घरमा ड्याडी र मामु पनि खुशी थिए। उनीहरु कनिकाका रिपोर्टिङहरु सधैँ पढ्थे र सुझाव दिन्थे। ड्याडी कनिकालाई भाषामा सुधार ल्याउन सुझाव दिन्थे। कनिकाले चाहने हो भने उनी उसका लागि भाषामा दखल भएको नेपाली टिचर खोजेर कोचिङ गराउन पनि तयार थिए। तर, कनिकामा कन्फिडेन्स थियो। अंग्रेजीमा नसोची दुई लाइन शुद्ध नेपाली लेख्न नजान्ने मानिस अहिले राम्रै नेपाली लेख्थी। उसको लेखाइ गम्भीर हुन्थ्यो। यो उसले सुदिप्तीबाट सिकेकी थिई।

कनिकाले चार्लीलाई अनिकेतका बारेमा केही बताएकी थिइन्। चार्लीले के सम्झिने हो? मनमा द्विविधा थियो। यस्ता कुराले चार्लीलाई फरक पर्दैन भन्ने थाहा थियो कनिकालाई। तैपनि, उसमा चार्लीसँग अनिकेतको चर्चा गर्ने साहस थिएन। उसलाई कताकता मनमा लागेको थियो, यो त चार्लीलाई विश्वासघात गरेसरह नै हो। कनिकामा आएको ठूलो परिवर्तन यही थियो कि ऊ कुनै पनि विषयलाई बाल मतलबको शैलीमा पन्छाउने प्रवृत्तिबाट मुक्त भएकी थिई। सम्बन्धहरुलाई गम्भीरताका साथ हेर्ने दृष्टि परिमार्जित

भएको थियो। ऊ सानातिना कुराबाट मुक्त थिई। उसको लगनशीलताले उसलाई प्रोफेशनलको हैसियतमा उचालेको थियो।

त्यो दिन कनिका अलिकति लिजर मूडमा थिइ। ऊ सुदिप्तीसँग मनका कुरा शेयर गर्न चाहन्थी। अनिकेतसँग उसको सम्वन्ध गम्भीर थिएन। उनीहरु बेलाबेलामा भेटिरहन्थे। कुराकानी गर्दथे। न त अनिकेतले कनिकाको दिलमा पस्ने कोसिस गरेको थियो। न त कनिकामा नै अनिकेतप्रति कुनै उत्साह र उत्सुकता थियो।

अफिसमा पुगेपछि उसको कल्पना सबै भताभुंग भयो। सुदिप्तीले उसको नाममा जारी भएको संसद रिपोर्टिङको पास भिडाई र भनी, ‘आइ होप कनि, यू वील इन्ज्वाय दि बेस्ट कमेडी अफ दि सिटी ओभर देयर।’ कनिकाले भनी, ‘बट सुदिप्ती, आई एम इन दि लिजर मूड। थिंकिङ आई वील टक वीथ यू।’

‘वी क्यान डु द्याट इन दि इभनिङ। आई वील ट्रिट यू। नाउ यू गो पार्लियामेन्ट एण्ड हायभ फन,' सुदिप्तीको जवाफ थियो।

यो सारै 'अड बीट' थियो कनिकाका लागि। राजनीतिका बारे उसलाई केही थाहा थिएन। इस्सूजका बारेमा पनि उसलाई केही जानकारी थिएन। उसले भोलालाई कन्ट्याक्ट गरी। भोलासँग उसको चिनजान रिपोर्टिङकै सिलसिलामा भएको थियो। भोला पोलिटिकल बीट नै हेर्थ्यो। कनिकाले भोलासँग आफनो समस्या शेयर गरी। भोला हाँस्यो र भन्यो, ‘डन्ट वरी, लेडी चार्म। आई वील हेल्प यू। बट दिस इज नट फ्री। यू हायभ टू ट्रिट मी ल्याभिस्ली।’

भोलाले उसलाई राजनीतिक रिपोर्टिङको बेसिक मात्र सिकाएन, देशको राजनीतिक परिदृश्य पनि बुझायो। हाउस शुरु हुने संकेत घन्टी बजेपछि उनीहरु प्रेसका लागि निर्धारित ठाउँतिर लागे। कनिकालाई हाउसको बनोट राम्रै लाग्यो। उसले देखी- सांसद बस्ने सिटहरु खालीखाली छन्। सभामुख आएर आफनो आसनमा बसिसकेकी छिन्। प्रतिपक्षका दर्जनभर सांसद बसेका छन्। सरकारका मन्त्रीहरुको पत्तो छैन। सभामुख रुल्लटुल्ल देखिन्छिन्। निर्वाचित संसदप्रति सांसदहरुकै उपेक्षा, संसदप्रति पार्टीहरु र सरकारको गैरजिम्मेवार व्यवहार र संसद परिसरमा केही मानिसको राउडी खालको हर्कत देखेर कनिका छक्क परेकी थिई।

त्यो दिन संसद लामो समय चलेन। छलफलका लागि संसदमा कुनै विषय नै थिएनन्। कनिका यो सुनेर छक्क परी। छलफलका लागि रिपोर्टरहरुसँग त यति धेरै विषय छ भने संसदसँग विषय नै नहुनु त अचम्मै हो।

साँझ अफिस पुगेर कनिकाले सुदिप्तीलाई सुनाई, 'नो कपी टुडे। हार्ड न्यूज त केही छैन। बट आई क्यान प्रड्यूस अ गुड कपी। डन्ट वरी।'

त्यसपछि सुदिप्ती र कनिका रोडहाउसतिर लागे। सुदिप्ती आज निकै निकै खुशी थिई। यो डबल खुशीको रोमान्च केही मिनटपछि अनुभूत गर्नेवाली थिई– कनिका। कनिकाले पहिले आफनो समस्या सुनाई सुदिप्तीलाई।

सोधी, 'भनूँ कि नभनूँ चार्लीलाई अनिकेतसँगको दोस्ती?'

जवाफ दिनुभन्दा पहिले सुदिप्ती लामो हाँसो हाँसी।

# २९. मन्त्रीज्यूसँग कनिकाको अन्तरंग वार्ता

सुदिप्तीले कनिकालाई यो साता नयाँ काम दिई– कुनै सेलेब्रिटी व्यक्तित्वको इन्टरभ्यू लिने। कनिकाले हुन्छ त भनी। तर उसलाई कसोकसो अप्ठेरो लागेको थियो। उसले सबभन्दा पहिले सेलेब्रिटी व्यक्तित्वको छनोट गरी। इन्टरभ्यूको लागि प्रश्न तयार गरी। त्यसपछि सेलेब्रिटीलाई फोन गरी।

कनिकाले छानेका सेलेब्रिटी थिए, एक चर्चित मन्त्रीज्यू। उसले मन्त्रीज्यूलाई फोन गरी। पिएले फोन मन्त्रीज्यूलाई टक्र्याएपछि उसले इन्टरभ्यूका लागि समय मागी। मन्त्रीज्यू तयार थिए।

प्रस्तुत छ, मन्त्रीज्यूसँग कनिकाको रोचक इन्टरभ्यू :

कनिका : नमस्कार, मन्त्रीज्यू। आराम हुनुहुन्छ?
मन्त्रीज्यू : नमस्कार। खोइ, आराम छु भनौं कि के भनौं? देशको अवस्था यस्तो छ। यो रुघाखोकीले पनि कहिल्यै छोडेन। आराम छु पनि कसरी भनौं र? हिजो फेमिलीलाई डिनरमा लैजान्छु भनेको थिएँ। 'जात्रा' हेर्न जाने योजना थियो। टाइम नै भएन। केको लैजानु? तै, घरमा चाँडै कुरा बुझिएछ। यो राजनीतिक सामाजिक र पारिवारिक जीवनका बीच सन्तुलन मिलाउनै गाह्रो।

कनिका : मन्त्री परिषदमा चाहिँ सन्तुलन मिलाउन कति सजिलो छ त?
मन्त्रीज्यू : त्यहाँ त सन्तुलन मिलाउने भन्दा पनि भागबण्डा हो। संसदीय व्यवस्थामा जस्तो व्यवस्थापिका संसदीय व्यवस्था अन्तर्गत बनेका गठबन्धन सरकारमा 'प्रधानमन्त्रीको विशेषाधिकार' भन्ने छैन। हामी मन्त्रीहरु स्वतन्त्र छौं। हामीलाई त पार्टीले सरकारमा पठाएको। हामी पार्टीप्रति जिम्मेवार छौं। तर, पार्टीले भनेपनि हामी मन्त्री छोडन बाध्य छैनौं। किनभने, पार्टीमा पनि हामी गुटका प्रतिनिधि हौं।

कनिका : अहिले मन्त्रीज्यूले भन्नुभए जस्तो सन्तुलन त भएन नि? खोइ त, प्रधानमन्त्रीले पचास लाख उपचार खर्च दिएरै छाडे।
मन्त्रीज्यू : अब हेर्नुहोस् न, यो पचास लाख आर्थिक सहायताको कुरा। मेरा विरोधीहरुले मलाई यसमा मुछेर बेकारमा विवादमा ल्याएका छन्। मैले मानव अधिकारको कुरा उठाउँदा पनि मलाई घैंटोसँग जोडिने काम गरियो। म आर्थिक सहायताको विरुद्ध होइन। कांग्रेस र एमालेका नेताहरुले करोडौं करोड आर्थिक सहायता लिएको र पाएको सन्दर्भमा आफ्नै पार्टीकी नेत्री, त्यसमा पनि त्यति ठूला नेताका पुत्रीलाई स्वास्थ्य–उपचारका लागि पैसा दिनेमा मेरो असहमति हुने कुरै भएन। मेरो भनाइ त कार्यविधि बन्दै छ। त्यसपछि खर्च दिनुपर्छ भन्ने हो।

कनिका : अहिलेसम्म सरकारबाट उपचार खर्च लिनैपर्ने अवस्थाका मानिसले पाएनन्। जो धनी छ, तिनले मात्रै आर्थिक सहायता पाए भन्ने चर्चाका बारे के भन्नुहुन्छ?
मन्त्रीज्यू : को धनी छ र को गरीब छ भन्दा पनि देशका लागि ठूलो योगदान दिएका व्यक्तिहरुलाई दिने हो यो खर्च। कोही कुनै ठूला नेताको छोरा वा छोरीका रुपमा जन्मिनु नै देशका लागि ठूलो योगदान हुन्छ। कसैको कर्म नै योगदान हुन्छ। यसमा को धनी को गरीबको कुरा आउँदैन। अब कोकोले केके योगदान गरेका छन्? त्यो पत्ता लगाउने काम मेरो मन्त्रालयको होइन। तपाईं रिपोर्टरहरुको हो।

कनिका : मन्त्रीज्यूको कार्यविधिमा पचास लाख दिने प्रोभिजन छैन रे नि त? त्यसमा दस–पन्ध्र लाखको मात्रै कुरा छ रे।
मन्त्रीज्यू : त्यो त के भो र? कार्यविधि पारित गरेपछि तीन पटक गरेर पचास लाख दिए भै गो नि।

कनिका : कार्यविधि नबन्दै सरकारले पचास लाख दियो। अब तपाईंको पोजिशन के त? प्रधानमन्त्री तपाईंसँग सहमत हुनुहुन्न। तपाईं प्रधानमन्त्रीसँग सहमत हुनुहुन्छ त?

मन्त्रीज्यू : क्याबिनेटमा पैसा दिने प्रस्ताव मैले लगेको होइन। गृहमन्त्रीले लगेको हो। मैले त विरोध गरेको जस्तो गरेर उल्टै सरकारी खजानाको पचास लाख बचाइदिएँ। मैले त्यति विरोध नगरेको भए करोडै जान्थ्यो। त्यसपछि त मैले प्रधानमन्त्रीको निर्णयमा सहमत नभई भएन नि। प्रधानमन्त्रीलाई कुनै अप्ठेरो नपरोस् भनेर नै म त्यो दिनको क्याबिनेटमा आइन। पोखरातिरै गुटनीति चलाएर बसेँ।

कनिका : क्याबिनेटमा प्रस्ताव लाने काम त सधैं गृहमन्त्रीले नै गर्ने हुन्। त्यसले के भो त?

मन्त्रीज्यू : मैले क्याबिनेटमा प्रस्ताव लगेको होइन भनेको। त्यहाँ पनि अलिकति राजनीति छ। हाम्रो आफ्नै गुटीय राजनीति। त्यसलाई तपाईंले बुझ्नपर्ने जरुरत छ।

कनिका : तपाईंका धैरै फेसबुक समर्थकहरुले त मन्त्रीले कि सरकारसँग लडेर सुजातालाई दिइएको रकम ट्रेजरीमा फर्काउनुपर्यो। कि नैतिकताको आधारमा राजीनामा गर्नुपर्योज भनेका छन् नि?

मन्त्रीज्यू : मलाई थाहा छ, मेरा विरोधीहरु मलाई नैतिकताको जञ्जालमा फसाएर बदनाम गर्न चाहन्छन्। म यस्ता सानातिना कुरामा नैतिकताका कारण राजीनामा दिने मुर्खता गर्दिन। म मन्त्री पदमा रहेर, सरकारमा बसेर, मन्त्रीको सुविधा लिएर, झण्डावाल गाडीमा हिँडेरै शासनसत्तामा रहेका तमाम विकृतिसँग लड्न चाहन्छु। म सबै कुरा नियमानुसार होस् भन्ने चाहन्छु। त्यसका लागि झण्डा र डण्डा अनिवार्य चाहिन्छ। त्यो नभएसम्म नेपालको राजनीति चल्दैन। यो साबित भइसकेको कुरा हो। सोशल नेटवर्कमा दुई-चार जनाले विरोध गरे पनि मेरा हजारौं साथी मेरो राजीनामाको विपक्षमा हुनुहुन्छ। मैले मन्त्रीबाट राजीनामा दिएँ भने मेरा यी सहश्र अनुयायीहरुको तर्फबाट सरकारमा कसले प्रतिनिधित्व गर्ने? त्यसमाथि, यो मन्त्री पद मेरा साना दुःखले मात्र अर्जेको होइन। यसमा सिटौलाजीको शुभाशिष् र शुभाकांक्षा छ। उहाँको वचन भए म अहिल्यै राजीनामा दिन्थे। उहाँको इच्छा त्यस्तो छैन।

कनिका : अब ती अनसन बूढाको कुरा गरौं। तपाई मन्त्री हुँदा ती निकै खुश थिए। अहिले फेरि अचानक अनसनमा बसेका छन्। के हुन्छ त तिनको अब?

मन्त्रीज्यू : यी सवै कुरा मैले मात्र हेर्ने होइन। म अहिले सरकारमा छु। सरकारका नीतिको प्रतिरक्षा गर्छु। तपाईंलाई थाहै छ, सरकारप्रति म निष्ठावान् छु। मन्त्री भएपछि म संसदमा रहेको महाभियोग मुद्दाबाट पनि पन्छिएँ। मेरो भनाइ बूढालाई जसरी पनि बचाउनुपर्दछ। अनसन गरेर मर्न दिनु हुँदैन भन्ने हो। सरकारले सबै काम बूढाले भनेजस्तै गर्न सक्दैन।

त्यसो गर्न व्यावहारिकताले दिँदैन। दशौं पटक किन अनसन बसेका हुन्? मैले बुझेको छैन। हामी मन्त्री भइसकेपछि त उनी अनसन बस्न नपर्ने हो।

कनिका : जसरी मन्त्रीज्यूका अनुयायीहरुको आवाज 'नाइदर सरेण्डर, नर रिजाइनेसन, कीप अन फाइटिङ' छ, त्यसरी नै बूढाका अनुयायीहरुको आवाज पनि त्यही छ। त्यसैले होला अनसन बसेको।

मन्त्रीज्यू : हो, मेरो पक्षमा त अनुयायी कार्यकर्ताहरुको आवाज नै मेरो बल हो। अहिले कतिपय लाल बुझक्कडहरुले मैले नैतिकताको आधारमा राजीनामा दिनुपर्ने कुरा उठाएर भ्रम सिर्जना गरेका छन्। तिनीहरुको चित्त बुझाउने बाटो खोज्दै छु म। नैतिकता भनेको के हो? कसैले अहिलेसम्म परिभाषित गरेका छैनन्। जहाँसम्म संघर्षको कुरा छ, त्यो सधैं गरिरहने होइन। सत्तामा बसेर पनि संघर्ष गर्न सकिन्छ। सत्तामा बसेर गरिने संघर्ष र सडकबाट गरिने संघर्ष फरक हुन्छ। सरकारमा बसेर संघर्ष गर्दा सबैलाई मिलाउनुपर्दछ। अनसन बूढाले यो कुरा बुझेनन्। पर्फेक्ट नभए पर्फेक्ट नजीकको स्थितिलाई त स्वीकार्नुपर्‍यो नि। आफ्नै हितचिन्तक सरकारलाई अप्ठेरोमा पार्नु त भएन नि।

क्रमशः

*(पहिलोपोस्टमा हरेक शुक्रबार यो सिरिजको कान्तिपुर गाथा जारी रहेको छ)*